● वर्ष १० ● अङ्क १० ● ज्येष्ठ २०६६ ● पूर्णाङ्क ११८



- **चितवन**, भ.न.पा- २, क्षेत्रपुर
  फोन: ०५६-५२१३८५
- **गोरखा**, सौरपानी–३ पोखरी,
  फोन: ९७४६०१८८७८, ९७४११२७७४५
- **कास्की**, पो.उ.म.न.पा.-१०, रामघाट,
  फोन: ०६१-५३०७८६
- **सर्लाही**, बरहथवा-७, एस्माली टोल,
  फोन: ०४६-५४०३३१
- **पाल्पा**, तानसेन,
  फोन: ९८४७०-२८१८८
- **ललितपुर**, लगनखेल,
  फोन:२२२००२१
- **गोरखा**, बसपार्क,
  फोन: ०६४-४२०३४८
- **तनहुँ**, दमौली, व्यास गुफा,
  फोन: ०६५-५६१६६२
- **लमजुङ**, बेँसीशहर, भीमसेनटोल
- **भक्तपुर**,कट्टुन्जे-१,
  फोन: ०१-६२१३४५५
- **काभ्रे**, बनेपा, न.पा. कार्यालय पछाडि
  फोन: ०१-६२२५१७२
- **कास्की**, लेखनाथ चोक,
  फोन: ०६१-२२९१९०
- **सिन्धुली**, रातमाटा
- **स्याङ्जा**, स्याङ्जाबजार
  फोन: ९८४६०-४४३५४
- **चितवन**, गौरीगञ्ज
- **सिन्धुपाल्चोक**, बाह्रबिसे
  फोन: ०१-६९१६५९३
- **कास्की**, अर्चलबोट, विन्ध्यवासिनी


पत्रिका व्यवस्थापन समितिद्वारा सम्पादित एवं

***सिद्धाश्रम शक्ति केन्द्रद्वारा* प्रकाशित**


## भक्ति विशेष


मूल्य रु. ३०/-, वार्षिक रु. ३५०/-

# जानकारी

सिद्धाश्रम शक्ति केन्द्र प्रचलित नेपाल कानूनअनुसार विधिवत् रूपमा दर्ता भएको एक अनुसन्धानमूलक आध्यात्मिक संस्था हो र यसको केन्द्रीय कार्यालय हाल बसुन्धरा, कल्की मन्दिरसँगै काठमाडौँमा रहेको छ । परमपूज्य सद्‌गुरुदेवद्वय परमहंस स्वामी श्री निखिलेश्वरानन्द महाराज एवं नेपालीहरूका गर्वका प्रतिमूर्ति महायोगी श्री शिव गोरक्षको अनुकम्पा, कृपा एवं आशीर्वादको फलस्वरूप यस केन्द्रको जन्म भएको हो । आफ्नो छुट्टै पहिचान, स्वतन्त्र अस्तित्व एवं आफ्नै किसिमको स्वाभिमान बोकेको यो संस्था देश विदेशमा रहेका अन्य कुनै संघ, संस्था वा आश्रमको शाखा, उपशाखा वा सम्पर्क कार्यालय नभएको व्यहोरा सम्बन्धित सबैका लागि जानकारी गराइएको छ । यो केन्द्र महान् गुरुहरूको स्पष्ट सूक्ष्म मार्गनिर्देशनमा आध्यात्मिक युग पुनर्निर्माणको लक्ष्यमा गतिशील छ । यहाँ संचालन भइरहेका सम्पूर्ण कार्यक्रम तथा गतिविधिहरू यसै केन्द्रमार्फत सोझै निर्देशित छन् । यहाँबाट उपलब्ध हुने सम्पूर्ण सामग्रीहरूको प्राण-प्रतिष्ठा विशेषरूपमा यही आश्रमबाट गरिएको हुन्छ । त्यसैले एक स्वतन्त्र र आफैमा सक्षम यस संस्थालाई अन्य कुनै संघ, संस्था वा आश्रमसँग तुलना गर्न खोज्नु, त्यस्तै प्रकारका कुराहरू यहाँबाट लागू गराउन, प्राप्त गर्न खोज्नु यस संस्थाको अवहेलना गरे सरह हुनेछ जे जति कार्यक्रमहरू यहाँ संचालन भइरहेका छन् र आगामी दिनहरूमा पनि संचालन हुँदै जानेछन्, ती सबै परमपूज्य सद्‌गुरुदेवहरूकै इच्छा एवं निर्देशनअनुसार सम्पन्न हुनेछन् । त्यसैले अनावश्यक तर्क-वितर्क, शङ्का-उपशङ्का गरी, भ्रम फैलाउँदै यस संस्थाको छविमाथि अनावश्यक टीका-टिप्पणी गर्नु सत्यता र वास्तविकतामाथि नै प्रश्नचिह्न लगाउनु हो । प्रत्येक व्यक्तिका लागि आवश्यक पर्ने सम्पूर्ण प्रकारका मार्गनिर्देशन प्रदान गरी भौतिक समस्याहरूको समाधान गर्दै आध्यात्मिक उच्चता प्रदान गर्न, पूर्णतामा लैजान यो केन्द्र सक्षम छ । विश्वास अविश्वासभन्दा माथि, साधारण व्यक्तिको सीमित सोचाइ, विचार र कल्पनाभन्दा परको यस अद्वितीय आश्रममा आबद्ध भई आफ्नो जीवनलाई उत्कर्षमा पुऱ्याउन सक्नु नै हाम्रो अहोभाग्य हुनेछ । यस्ता प्रकारका अनावश्यक भ्रमबाट सतर्क हुँदै पूर्णरूपमा स्पष्ट भएर मात्र अघि बढ्न हुन सम्पूर्ण महानुभावहरूमा सिद्धाश्रम शक्ति केन्द्र हार्दिक अनुरोध गर्दछ । साथै केन्द्रको आफ्नै प्रकारको नीति, नियम र अनुशासन भएकोले यसलाई पालना गर्न नसक्ने व्यक्तिहरूका लागि यस केन्द्रमा कुनै स्थान रहने छैन र यससम्बन्धी कुनै किसिमको सुनुवाइ पनि नहुने व्यहोरा अवगत गराइएको छ । साथै, आध्यात्मिक शक्ति अनुसन्धानमूलक यस मासिक पत्रिकामा प्रकाशित लेख, रचना, चित्रादिमा संस्थाको सहमति हुन आवश्यक नरहेको व्यहोरा अवगत गराइन्छ ।

## परामर्श सेवासम्बन्धी सूचना

सिद्धाश्रम शक्ति केन्द्रमा परामर्श सेवासम्बन्धी प्राप्त सुविधा निम्नानुसार रहेको जानकारी गराइन्छ ।

| स्थान | समय | बार |
|---|---|---|
| केन्द्रीय कार्यालय | साँझ ४:३० बजेपछि | सोमबार र मङ्गलबार |
| ललितपुर सम्पर्क कार्यालय | दिउँसो ४:०० बजेपछि | मंगलबार र बिहीबार |
| भक्तपुर सम्पर्क कार्यालय | दिउँसो ४:०० बजेपछि | शनिबार र बुधबार |
| बनेपा सम्पर्क कार्यालय | दिउँसो ४:०० बजेपछि | प्रत्येक आइतबार |

## आश्रमका नियमित कार्यक्रमहरू

- आश्रम खुल्ने समय : प्रत्येक दिन बिहान १०:०० बजेदेखि साँझ ६:०० बजेसम्म ।
- गोरक्ष निखिल पुस्तकालय खुल्ने समय : प्रत्येक दिन १०:०० बजेदेखि साँझ ५:०० बजेसम्म ।
- परामर्श सेवासम्बन्धी भेटघाट : अपराह्न ३:०० बजेपछि ।
- आरती : प्रत्येक साँझ ५:०० बजे ।
- गुरु पूजन : प्रत्येक बृहस्पतिबार बिहान १०:०० बजेदेखि ।
- विशेष गुरु पूजन : प्रत्येक अंग्रेजी महिनाको २१ तारीख, बिहान १०:०० बजेदेखि ।
- आध्यात्मिक शक्ति अनुसन्धानमूलक नेपालको एक मात्र मासिक पत्रिका 'गोरक्ष निखिल वाणी'को नियमित प्रकाशन ।
- विभिन्न चाड-पर्व एवं अवसरहरूमा विशेष कार्यक्रम ।
- विशेष हवन: प्रत्येक महिनाको पहिलो सोमवार श्री शिव गोरक्ष हवन, पहिलो मङ्गलवार तान्त्रोक्त वटुक भैरव हवन, पहिलो बुधवार तान्त्रोक्त महालक्ष्मी हवन र पहिलो बिहीवार तान्त्रोक्त बगलामुखी हवन कार्यक्रम संचालन ।

**आवरण तथा भित्री कम्प्युटर सेटिङ्ग**
सिद्धाश्रम शक्ति केन्द्र, कम्प्युटर उपविभाग

**मुद्रण**
**भेराइटी प्रिन्टर्स प्रा.लि.**
कुलेश्वर, काठमाडौँ ।

**पत्रिकाको कार्यालय**
**बसुन्धरा, कल्की मन्दिर, काठमाडौँ, नेपाल**
**फोन नं:** २०७१२००, २१००१५३, **पत्रिका वितरण फोन नं:** ०१-६२२५१७७ (CDMA Phone), URL: www.gnv.org.np, Email: info@gnv.org.np

# आफ्नै कुरा

नेपाल आज पनि अशान्तिको अग्निमा जलिरहेको छ। सामाजिक जनजीवन अस्तव्यस्त भइरहेको छ। व्यक्तिहरु एक किसिमको भय, त्रासबाट गुज्रिरहेका छन्। कति बेला कस्तो किसिमको घटना घट्छ, व्यक्तिहरु अन्यौलमा छन्। बिहान हिँडेको व्यक्ति फर्किन्छ कि फर्किँदैन कुनै निधो छैन। देशमा अब शान्ति होला, सुखसँग आफ्ना दैनिक जीवनका कार्यहरुलाई अगाडि बढाउन पाइएला भन्ने आम व्यक्तिहरुको आशा निराशामा बदलिएको छ। पार्टीहरुको आपसी खिचातानी देश, राष्ट्र, जनताको भन्दा पनि आफ्नै दलीय स्वार्थमा अगाडि बढेको पाइन्छ। यसरी पार्टीगत स्वार्थ, व्यक्तिको आफ्नै कमजोरीको कारण आम नागरिक दुःख, बाधा, व्यवधान झेल्न विवश छन्।

जबसम्म व्यक्ति आफ्नो घर, परिवार, समाजभन्दा माथि उठ्न सक्दैन, आध्यात्मिक भावभूमिले प्रभावित हुँदैन, आफ्नो चिन्तनलाई बदल्न सक्दैन तबसम्म उसले केही गर्न सक्दैन। न त आफू बदलिन्छ, न देश, राष्ट्रलाई नै सही नेतृत्व दिन सक्दछ।

आज समाजमा हेर्‍यौँ भने जताततै मानिसले मानवता गुमाइरहेको छन्, आफ्ना नैतिकता, चरित्रलाई लत्याइरहेका छन्, स्वार्थी प्रवृत्तिलाई अँगालिरहेका छन् जसले गर्दा पनि व्यक्ति-व्यक्तिबीच विश्वासको संकट मडारिइहेको छ। व्यक्ति आफ्नै स्वार्थ, आफ्नै भलोको लागि योजना बुनिराखेको छ, छलकपट, धोकाबाजी, निकृष्ट कर्महरुमा नै मानिस रमाइराखेको छ, अरूको दुःखमा नै उसले आनन्द लिइराखेको छ। यसरी मानिस संसारिकताको चक्रव्यूहभित्र आ-आफ्ना प्रकारका कर्म गरी सजाय एवं आशीर्वादको भागीदार बनिराखेको छ।

आजको समयको निकास भनेकै आध्यात्मिकता हो। सत्यता र सद्गुरु नै आजको आवश्यकता हो। जब व्यक्तिले आफ्नो जीवनको मूल आधार सत्यलाई बनाउँछ, सत्यलाई अँगाल्न थाल्दछ, यसैको आश्रयमा जीवनलाई अगाडि बढाउँदछ तब मात्र कल्याणको मार्गको ढोका खुल्दछ। यसैले अध्यात्मलाई अँगालौँ, सत्यतालाई अँगालौँ जीवनलाई ऊर्ध्वमुखी बनाऔँ।

यसपालिको अंकलाई हामीले 'भक्ति विशेष'को रुपमा निकालेका छौँ। भक्तिको माध्यमबाट आध्यात्मिक शक्तिहरु प्राप्त गर्न सक्दछौँ। भक्ति नै शक्ति प्राप्तिको सशक्त माध्यम हो। भक्ति आन्तरिक विषय हो। बाहिरबाट हाउभाउ गर्दैमा भक्ति प्रस्फुटन हुँदैन। ह्रदयबाट फुर्ने विषय हो भक्ति। जबसम्म रोम प्रतिरोम भक्तिमय बन्दैन, प्रत्येक क्षणको सोचाइ, विचार, चिन्तन गुरुमा, भगवान्मा लगाउन सकिँदैन भक्तिको मूल फुट्दैन। आफ्नो सम्पूर्ण उद्देश्य, लक्ष्य केवल एक मात्र परमात्मामा लगाई निरन्तर यसैमा लागिरहनु नै वास्तविक भक्ति हो। भक्तिको बारेमा शास्त्रहरुमा थुप्रै प्रसंगहरु उल्लेख भएको पाइन्छ, भक्ति एवं भक्तहरुका थुप्रै विधिहरुमाथि प्रशस्त व्याख्या भएको पाइन्छ। विराट् छ भक्तिको स्वरुप। त्यसैले शब्द दायराभित्र व्याख्याभन्दा पनि हाम्रो ह्रदयबाट यसको रसास्वादन हुनु आवश्यक छ भन्ने ठानेका छौँ। यसैले यस अंकमा हामीले केवल विषय प्रवेशको जमर्को मात्र गरेका छौँ।

अन्तमा, यस अंकको प्रकाशनको क्रममा हामीबाट भए गरेका समस्त कमी-कमजोरी, न्यूनताको लागि परमपूज्य सद्गुरुदेवहरु एवं यहाँहरुसँग पनि क्षमा माग्दै आवश्यक सल्लाह, सुझावको अपेक्षा राख्दछौँ। अस्तु।

ईश्वर वा देवदेवीप्रति रहने मनको प्रीति, श्रद्धा, आस्था, परम विश्वास, मान्यजन र गुरुजनप्रतिको आदरभाव, सम्मान, अगाध माया, अनुराग, उपासना, सेवा भनी नेपाली शब्दसागरमा भक्तिको परिभाषा दिइएको पाइन्छ । संस्कृत नेपाली वृहत् शब्दकोषले ईश्वरलाई प्रसन्न पार्न गरिने कामनारहितको श्रद्धापूर्वकको प्रेम भनेर भक्तिलाई अर्थ्याएको छ । उक्त शब्दकोषमा गौणी (साधन अवस्थाको भक्ति) र पराभक्ति वा पर-भक्ति (सिद्ध अवस्थाको भक्ति) गरी दुई भेद बताइएको पाइन्छ। एउटा व्युत्पत्ति त 'भजनं भक्तिः' यस्तो छ, यो सिद्ध भक्ति हो । दोस्रो व्युत्पत्ति 'भजयते भक्तिः' हो, यो साधना भक्ति हो । पुनः गौणी भक्तिलाई पनि अन्य दुई खण्डमा विभाजित गरी प्रस्तुत गरिएको छ– १. वैधी– विधि, निषेध आदि शास्त्रवचनअनुसारको भक्ति, २. रागानुगा– प्रेमलाई नै मुख्य मानिएको भक्ति ।

स्कन्दपुराणमा छ प्रकारको भक्ति बताइएको छ– मानसी (मनले गरिने), वाचिकी (बोलीले गरिने), कायिकी (शरीरले गरिने), लौकिकी (लोकाचारले गरिने), वैदिकी (वैदिक मन्त्रद्वारा गरिने) र आध्यात्मिकी (अध्यात्मज्ञानद्वारा गरिने) । **मानसी भक्ति** : यसमा ध्यानभन्दा पहिले भगवान्लाई बारम्बार याद गरिन्छ जसबाट धारणा बन्दछ र भगवान् सत् हुनुहुन्छ, चित् हुनुहुन्छ, आनन्दस्वरूप हुनुहुन्छ भन्ने वेदको अर्थ बुद्धिमा बसाइन्छ । वेदार्थ आफ्नो बुद्धिमा बसाएर भगवान्लाई आफ्नो मानेर साकार, निराकार-अन्तरात्मा रूपको ध्यान गरिन्छ । **वाचिकी भक्ति** : वेदमन्त्रहरूको उच्चारण, गुरुमन्त्रको जप, भगवन्नाम-जप, वेदको पाठ, आरण्यक पाठ आदि वाचिकी भक्तिमा आउँछन् । **कायिकी भक्ति** : नियम-पालन, इन्द्रिय-संयम, व्रत, उपवास जस्तैः पूर्णिमाको व्रत, एकादशीको व्रत जसले पापनाशिनी शक्ति दिन्छन् एवं आरोग्यप्रदायक छन्, यिनीहरू सबै कायिकी भक्तिमा पर्दछन् । शारीरिक कष्ट सहेर व्रत, उपवास, नियको पालनाबाट सिद्धिहरू पनि प्राप्त हुन्छन् । **लौकिकी भक्ति** : यसमा अर्घ्य, पाद्य आदिबाट भगवत्पूजन, रात्रि जागरण, वाद्य, गीत आदिबाट भगवान्को कीर्तन गरेर नृत्य गर्नु आदि समावेश हुन्छन् । **वैदिकी भक्ति** : ऋग्वेद, यजुर्वेद र सामवेदको पाठ तथा जप गर्नु, संहिताहरूको अध्ययन गर्नु एवं यज्ञ-याग आदि गर्नु वैदिकी भक्ति हो । **आध्यात्मिकी भक्ति** : यस भक्तिका साधक सदा अफ्नो इन्द्रियहरूको संयम गरेर प्राणयामपूर्वक ध्यान गर्दछ । उसले ध्यानमा देख्दछ कि भगवान्को मुख अनन्त तेजले उद्दीप्त भइरहेको छ, उहाँको कटिमाथिको भागसम्म लटकिएको यज्ञोपवीतले शोभा पाइरहेको छ । उहाँको शुक्ल वर्ण छ, चार भुजा छन् । उहाँको हातमा वरद एवं अभयमुद्रा बनेका छन् । उहाँले पहेँलो वस्त्र धारण गर्नुभएको छ तथा उहाँका नेत्र अत्यन्त सुन्दर छन् । यसप्रकार योगयुक्त पुरुषले आफ्नो हृदयमा परमेश्वरको ध्यान गर्दछन् ।

**यस भक्तिका साधक सदा अफ्नो इन्द्रियहरुको संयम गरेर प्राणयामपूर्वक ध्यान गर्दछ। उसले ध्यानमा देख्दछ कि भगवान्को मुख अनन्त तेजले उद्दीप्त भइरहेको छ, उहाँको कटिमाथिको भागसम्म लटकिएको यज्ञोपवीतले शोभा पाइरहेको छ। उहाँको शुक्ल वर्ण छ, चार भुजा छन्। उहाँको हातमा वरद एवं अभयमुद्रा बनेका छन्। उहाँले पहेँलो वस्त्र धारण गर्नुभएको छ तथा उहाँको नेत्र अत्यन्त सुन्दर छन्। यसप्रकार योगयुक्त पुरुष आफ्नो हृदयमा परमेश्वरको ध्यान गर्दछ।**

**न भूप देवार्चनयज्ञतीर्थस्नान-व्रताचारक्रियातपोभिः ।**
**तथा विशुद्धिं लभतेऽन्तरात्मा यथा हृदिस्थे भगवत्यनन्ते ॥**

राजन् ! देवपूजा, यज्ञ, तीर्थ-स्नान, व्रतानुष्ठान, तपस्या र नाना प्रकारका कर्मबाट पनि अन्तःकरणको त्यति शुद्धि हुँदैन जति भगवान् अनन्तको ध्यान गर्नाले हुन जान्छ । (पद्म पुराण, पाताल खंडः ८५।२८) । जसरी प्रज्ज्वलित अग्निले काठलाई भस्म गर्दछ त्यसरी नै भगवान्को भक्तिले मानिसहरूको पापलाई तत्काल दग्ध गर्दछ ।

भगवान्‌लाई सन्तुष्ट गर्नेहरू आ-आफ्नो श्रद्धा, भाव तथा भक्तिको साधन-सामग्रीअनुसार आफ्नो चित्तका करोडौं जन्मका दूषित संस्कारलाई मेटेर हृदयमा भगवद्‌भाव जागृत गर्दछन्।

रामायण, महाभारतमा नौथरि भक्ति (नवधा भक्ति) बताइएको पाइन्छ। देवी भागवत्‌को देवी गीतामा भक्तिका तीन भेद बताइएका छन्– सात्त्विकी, राजसी र तामसी। सात्त्विकी भक्ति– सेवक बनी कर्म गर्नु, कर्तव्य सम्झी गरेको कर्म ईश्वरप्रीतिको लागि ईश्वरमा समर्पण गरिने भक्ति। राजसीभक्ति– यश, भोगको कामनाले ईश्वरबाट आफू अलग सम्झी फल प्राप्ति र भोग प्राप्त गरिने भक्ति। तामसीभक्ति– अर्कालाई सताउन दम्भ, मात्सर्य, क्रोध गर्दै गरिने भक्ति। उपर्युक्त तीन प्रकारको भक्तिभन्दा माथिल्लो तहको भक्तिलाई देवी गीतामा पराभक्ति र श्रीमद्‌भागवत्‌गीतामा अनन्यभक्ति (गीता ११/५५) अव्यभिचारिणी भक्ति (गीता १३/१०) अथवा अव्यभिचारी भक्तियोग (गीता १४/१६) भनिन्छ। जैनमतअनुसार त्यस्तो ज्ञान नै भक्ति हो जसमा हुनसम्म आनन्द हुन्छ औ सर्वप्रिय अनन्य प्रयोजन विशिष्ट र वितृष्णा बढाउने हुन्छ।

वेदका समस्त ऋचाले केवल ईश्वरतिर नै प्रेरित गर्दछन्। शाण्डिल्य पनि भन्दछन्– **'न क्रिया न कृत्यनपेक्षणाज्ज्ञानवत्'** अर्थात् जसरी ज्ञानमार्गीका लागि कर्मको अपेक्षा हुँदैन, त्यसरी नै भक्तिमार्गीका लागि कर्म अनिवार्य छैन। भक्तको इच्छामाथि कर्म गर्ने र नगर्ने कुरा निर्भर रहेको हुन्छ। यसैकारण भक्तिलाई स्वतन्त्र बताइएको छ। वेदव्यास भन्दछन्– **अहैतुक्यव्यवहिता या भक्तिः पुरुषोत्तमे।** (भा० ३/२९/१२)। भक्तिमाथि कर्म, ज्ञान आदि कुनैको पनि आवरण रहन सक्दैन। रामायणका अनुसार– **'भक्ति स्वतंत्र सकल सुख खानी।'** रूप गोस्वामी आदि रसिकहरूको मतानुसार– **'अन्याभिलाषिताशून्यं ज्ञानकर्माद्यनावृतम्।'** अर्थात् ज्ञान, कर्म, तपश्चर्यादिबाट भक्ति अनाच्छन्न रहन्छ। भक्ति स्वतन्त्र छ। जय गुरुदेव !

**यो न हृष्यति न द्वेष्टि न शोचति न काङ्क्षति।**
**शुभाशुभपरित्यागी भक्तिमान्यः स मे प्रियः॥**

*यः -जो; न- कहिले पनि होइन; हृष्यति- हर्षित हुन्छ; न- कहिले पनि होइन; द्वेष्टि- शोक गर्दछ; न- कहिले पनि होइन; शोचति- पश्चात्ताप गर्दछ; न- कहिले पनि होइन; काङ्क्षति- इच्छा राख्दछ; शुभ- शुभ; अशुभ- तथा अशुभको; परित्यागी- त्याग गर्नेवाला, भक्तिमान– भक्त; यः- जो; सः- उनी छन्; मे- मेरो; प्रियः- प्रिय।*

जो न कहिले हर्षित हुन्छ, न शोक गर्दछ, जो न त पछुताउँछ, न इच्छा गर्दछ, तथा जसले शुभ तथा अशुभ दुवै प्रकारका वस्तुहरूको परित्याग गर्दछ, यस्तो भक्त मलाई अत्यन्त प्रिय लाग्छ।

तात्पर्य– शुद्ध भक्त भौतिक लाभबाट न त हर्षित हुन्छ, न त हानीबाट नै दुःखी हुन्छ, ऊ पुत्र वा शिष्यको प्राप्तिका लागि न त उत्सुक रहन्छ, न नमिल्नाले नै दुःखी हुन्छ। ऊ आफ्नो कुनै प्रिय वस्तु गुम्न जाँदा त्यसका लागि पछुताउँदैन। यसै प्रकार यदि उसलाई अभीप्सितको प्राप्ति हुँदैन भने पनि ऊ दुःखी हुँदैन। यी समस्त प्रकारका शुभ, अशुभ तथा पापकर्महरूबाट सदैव पर रहन्छ। परमेश्वरको प्रसन्नताका लागि ऊ ठूलोभन्दा ठूलो विपत्ति सहन तैयार रहन्छ। भक्तिको पालनमा उसको लागि केही पनि बाधक रहँदैन। यस्तो भक्त श्रीकृष्णलाई अतिशय प्रिय लाग्दछ।

# आदि शंकराचार्यको श्रीकृष्ण भक्ति

यमुनानिकटतटस्थितवृन्दावनकानने महारम्ये
कल्पद्रुमतलभूमौ चरणं चरणोपरिस्थाप्य ।
तिष्ठन्तं घननीलं स्वतेजसा भासयन्तमिह विश्वम्
पीताम्बरपरिधानं चन्दनकर्पुरलिप्तसर्वांगम् ॥
आकर्णपूर्णनेत्रं कुण्डलयुगमण्डितश्रवणम्
मन्दस्मितमुखकमलं सकौस्तुभोदारमणिहारम् ॥
वलयांगुलीयकाद्यानुज्ज्वलयन्तं स्वलंकारान्
गलविलुलितवनमालं स्वतेजसापास्तकलिकालम् ॥
गुंजारवालिकलितं गुञ्जापुंजान्विते शिरसि
भुञ्जानं सह गोपैः कुंजांतर्वर्तिनं नमत ।
मन्दारपुष्पवासितमंदानिलसेवितपरानन्दम्
मन्दाकिनीयुतपदं नमत महानन्ददं महापुरुषम् ॥
सुरभीकृतदिग्वलयं सुरभिशतैरावृतः परितः ।
सुरभीतिक्षपणमहासुरभीमं यादवं नमत ॥

अर्थात्, यमुनाको तटमा स्थित वृन्दावनको कुनै अति मनोहर वाटिकामा कल्पवृक्ष मुनिको भूमिमा चरणमा चरण राखेर श्रीकृष्ण बस्नुभएको छ जो नवीन बादल सदृश श्याम वर्णको हुनुहुन्छ, उहाँले पीताम्बर ओढ्नुभएको छ, एवं सारा शरीरमा कपूरमिश्रित चन्दनको लेप गर्नुभएको छ । जसका कर्णपर्यन्त ठूलाठूला आँखा छन्, कानमा सुन्दर कुण्डल सुशोभित छ, मुखारविन्द मन्दमन्द मुस्कुराइरहेको छ, जसको वक्षस्थलमा कौस्तुभमणियुक्त सुन्दर माला सुशोभित भइरहेको छ, जो आफ्नो कान्तिबाट कंकण एवं औंठी आदि मनोहर गहनाहरूको कान्तिको अभिवृद्धि गरिरहनुभएको छ, जसको गलामा वनमाला लटकिरहेको छ, जसले आफ्नो तेजको प्रभावबाट कलिकाललाई नष्ट गर्नुभयो, जसको गुंजावलि-अलंकृत मस्तक गुञ्जेर आँखीभौँसँग शोभायमान भइरहेको छ । कुनै कुञ्जभित्र बसेर ग्वालाहरूका साथ भोजन गर्नुहुँदै त्यस श्रीकृष्णको स्मरण गर जो कल्पवृक्षको फूलको सुगन्धले युक्त मन्दमन्द वायुबाट सेवित छ, जो स्वयं परमानन्दस्वरूप हुनुहुन्छ, जसको चरणमा भगवती भागीरथी विराजमान छिन् । त्यस परमानन्ददायक श्रीकृष्णको स्मरण गर जसले समस्त दिशालाई सुगन्धित गरिरहनुभएको छ, जो सैकडौं कामधेनुभन्दा पनि सुन्दर गाईहरूबाट घेरिनुभएको छ । जो देवताहरूको भयलाई भगाउने एवं भयानक राक्षसहरूलाई पनि भयभीत गर्नुहुने हुनुहुन्छ, त्यस यदुनन्दनको स्मरण गर ।

# भक्ति, भक्त र भक्तवत्सलता

भगवान्‌को चरणकमलमा परम प्रेम–परानुरक्ति नै भक्ति हो । मानव जीवनको परम श्रेय भगत्प्राप्तिका जति पनि साधन छन्, ती सब भक्तिको अधीन छन् । प्रभु प्राप्तिको अन्य यथा योग, ज्ञान, तप आदिमा त अनेक बाधाहरू आउँछन् तर भक्ति विघ्न बाधारहित मार्ग हो । त्यसैले गोस्वामीले यसलाई राजपथ भनेका छन् ।

भगवान् श्रीरामले काकभुशुण्डीलाई भक्तिको महिमा बताउनुहुँदै भन्नुहुन्छ कि भक्तिहीन ब्रह्मा नै किन नहुन्, त्यो मलाई सबै जीवहरूसमान प्रिय लाग्छ तर भक्तिमान् अत्यन्त नीच प्राणी पनि मलाई प्राणसमान प्रिय लाग्छ–

**भगति हीन बिरंचि किन होई ।**
**सब जीवहु सम प्रिय मोहि सोई ॥**
**भगतिवंत अति नीचउ प्रानी ।**
**मोहि प्रानप्रिय असि मम बानी ॥**

(रा०च०मा० ७।८६।९-१०)

श्रीरामचरितमानसको आरण्यकाण्डमा वर्णित शबरी प्रसङ्ग भगवान्‌को यसै कथनको साक्षात् प्रमाण हो, जहाँ शबरी आफैलाई 'अधम ते अधम अधम अति नारी' भन्छिन् र भगवान् श्रीराम प्रत्युत्तरमा उसलाई ' भामिनि' भन्नुहुन्छ । उहाँले भक्तिको सर्वोच्चता बताउनुहुँदै भक्तिमार्गमाथि हिँड्न साधकहरूलाई मार्गदर्शन गर्नुहुन्छ–

**प्रथम भगति संतन्ह कर संगा । दूसरि रति मम कथा प्रसंगा ।**
**गुर पद पंकज सेवा तीसरि भगति अमान ।**
**चौथि भगति मम गुन गन करइ कपट तजि गान ॥**

(रा०च०मा० ३।३५।८; दो० ३५)

अर्थात्, पहिलो भक्ति हो संतहरूको सत्सङ्ग, दोस्रो भक्ति हो मेरो कथा प्रसङ्गमा प्रेम, तेस्रो भक्ति हो अभिमानरहित भएर गुरुको चरणकमलको सेवा र चौथो भक्ति यो हो कि कपट छोडेर मेरो गुण समूहको गान गर्नु ।

**मंत्र जाप मम दृढ़ बिस्वासा ।**
**पंचम भजन सो बेद प्रकासा ॥**
**छठ दम सील बिरति बहु करमा ।**
**निरत निरंतर सज्जन धरमा ॥**
**सातवँ सम मोहि मय जग देखा ।**
**मोतें संत अधिक करि लेखा ।**
**आठवँ जथालाभ संतोषा ।**
**सपनेहुँ नहिं देखइ परदोषा ।**
**नवम सरल सब सन छलहीना ।**
**मम भरोस हियँ हरष न दीना ॥**
**नव महुँ एकउ जिन्ह कें होई ।**
**नारि पुरुष सचराचर कोई ॥**
**सोइ अतिसय प्रिय भामिनि मोरें ।**
**सकल प्रकार भगति दृढ तोरें ॥**

(रा०च०मा० ३।३६।१-७)

मेरो (राम मन्त्रको जप र ममा दृढ विश्वास जो वेदमा प्रसिद्ध छ, यो पाँचौं भक्ति हो । छैटौं भक्ति हो– इन्द्रियको निग्रह, शील (राम्रो स्वभाव वा चरित्र) धेरै कार्यहरूबाट वैराग्य र निरन्तर संत पुरुषहरूको धर्म (आचरण) मा लागिरहनु । सातौं भक्ति हो जगत्लाई समभावमा ममा ओतप्रोत (राममय) देख्नु । आठौं भक्ति हो जे जति प्राप्त हुन्छ त्यसैमा सन्तोष गर्नु र सपनामा पनि अर्काको दोषलाई नदेख्नु। नवौं भक्ति हो सरलता र सबैका साथ कपटरहित व्यवहार गर्नु, हृदयमा मेरो भरोसा राख्नु र कुनै पनि अवस्थामा हर्ष र दैन्य (विषाद) नहुनु । यी नौ भक्तिहरूमध्ये जसमा एउटा मात्र पनि भक्ति हुन्छ त्यो स्त्री-पुरुष, जड-चेतन कोही होस्, हे भामिनि ! मलाई यो अत्यन्त प्रिय लाग्छ । फेरि तिमीमा त सबै प्रकारको भक्ति दृढ छ ।

भक्त भगवान्को भक्तिको मूर्तिमान् स्वरूप हो । भक्तलाई भगवान्को चरणमा प्रेमको अतिरिक्त अरू केही पनि प्राप्त गर्ने इच्छा रहँदैन। देवी शतरूपा भगवान्सँग वर माग्दै भन्छिन्– हे नाथ ! हजूरका जो निज जन छन्, उनीहरू अलौकिक, अखण्ड सुख पाउँछन् र जुन परमगतिलाई प्राप्त हुन्छ, हे प्रभो ! त्यही सुख, त्यही गति, त्यही भक्ति, त्यही आफ्नो चरणमा प्रेम, त्यही ज्ञान र त्यही रहन-सहन कृपा गरेर हामीलाई पनि दिनुहोस्–

**जे निज भगत नाथ तव अहहीं ।**
**जो सुख पावहिं जो गति लहहीं ॥**
**सोइ सुख सोइ गति सोइ भगति सोइ निज चरन सनेहु ।**
**सोइ बिबेक सोइ रहनि प्रभु हमहि कृपा करि देहु ॥**

(रा०च०मा० १।१५।८; दो० १५०) भगवान् श्रीराम अनुज लक्ष्मणसँग भक्तियोगको वर्णन गर्दै एवं भक्तहरूको लक्षण बताउनुहुँदै भन्नुहुन्छ–

**संत चरन पंकज अति प्रेमा ।**
**मन क्रम बचन भजन दृढ़ नेमा ॥**
**गुरु पितु मातु बंधु पति देवा ।**
**सब मोहि कहँ जानै दृढ सेवा ॥**
**मम गुन गावत पुलक सरीरा ।**
**गदगद गिरा नयन बह नीरा ॥**
**काम आदि मद दंभ न जाकें ।**
**ण्तात निरंतर बस मैं ताकें ॥**

(रा०च०मा० ३।१६।९–१२)

जसको सन्तहरूको चरणकमलमा अत्यन्त प्रेम छ; मन, वचन र कर्मबाट भजनको दृढ नियम छ र जसले मलाई नै गुरु, पिता, माता, भाइ, पति र देवता सबै ठानेको छ र सेवामा दृढ छ, मेरो गुण गाउने बेलामा जसको शरीर पुलकित हुन जान्छ, वाणी गद्गद् हुन जान्छ र आँखाबाट प्रेमाश्रु बहन लाग्दछ र काम, मद र दम्भ आदि जसमा छैन, हे भाइ ! म सदा उसको वशमा हुन्छु ।

पुन: प्रभु श्रीराम बताउनुहुन्छ– जसको कर्म, वचन र मनबाट मेरो नै गति छ; र जसले निष्काम भावले मेरो भजन गर्दछ, उसको हृदयकमलमा म सदा विश्राम गर्ने गर्दछु ।

जसरी गाईको आफ्ना बाच्छाबाच्छीप्रति वा आमाको शिशुप्रति वत्सलभाव हुन्छ, ठीक त्यसैगरी वात्सल्यभाव भगवान्को आफ्ना भक्तहरूप्रति रहन्छ । निर्गुण भक्तिधारका शीर्षस्थ संत कबीरदासले त भगवान्लाई माता र आफूलाई उहाँका बालक मान्छन्– '**हरि जननी मैं बालक तेरा ।**'

श्रीरामचरितमानसमा गोस्वामीले भगवान्को भक्तवत्सलताको ठाउँ ठाउँमा वर्णन गरेका छन् । अरण्यकाण्डको एउटा प्रसङ्गमा भगवान् श्रीराम नार दसँग भन्नुहुन्छ– हे मुनि ! सुन, म तिमीलाई हर्षका साथ भन्दछु कि जसले समस्त आशा, भरोसा छोडेर केवल मलाई मात्र भज्दछ म उसको सदा त्यसरी नै रक्षा गर्दछु जसरी माताले बालकको रक्षा गर्दछिन्। काकभुशुण्डीले गरुडलाई भगवान्को भक्तवत्सलता बताउँदै भन्नुहुन्छ कि भगवान् आफ्ना भक्त-सेवकहरूप्रति अत्यन्त वत्सल हुनुहुन्छ । उहाँ भक्तहरूको अलिकति पनि अहित भएको हेर्न सक्नुहुन्न । काम, क्रोध, लोभ, मोह, अभिमान आदि यस्ता दुर्गुण हुन् जसले भक्तको अहित गर्न सक्दछ । त्यसैले भगवान् यसलाई टाढा गर्नुहुन्छ । त्यसबेला भगवान्ले त्यस माताले जस्तै व्यवहार गर्नुहुन्छ जसले आफ्नो बालकको शरीरमा फोका उठेपछि उसको शरीरमा शल्यक्रिया गराइरहेकी छिन् । बच्चाको फोका चिर्दा पीडा भएर दु:ख पाए पनि र अधीर भएर रोए पनि रोग नाशका लागि माताले बच्चाको त्यस पीडालाई वास्ता नगरेजस्तै श्रीरघुनाथले आफ्नो दासको अभिमान उसको हितका लागि हर्नुहुन्छ । जय गुरुदेव !

# साधनामा भक्तिको महत्त्व

*मन्त्र साधना उर्ध्व संगतिको खण्ड 'घ'अन्तर्गत सावर संरचनाबाट प्राप्त दिव्य साधनात्मक सूत्रहरूभित्रको भक्ति सूत्र यस अङ्कको विषयवस्तुसित सान्दर्भिक देखिएकोले पुन: प्रकाशित गरिएको छ ।*

मन्त्र साधनामा अगाडि बढ्ने प्रत्येक साधक साधिकाको लागि भक्तिको ठूलो महत्त्व छ । जब आफ्ना इष्ट, गुरूप्रति अथाह भाव बनाइन्छ अर्थात् श्रद्धा राखिन्छ, तब भक्तिको रस विष्फोट हुन थाल्दछ । भगवान्प्रति, गुरूप्रति, आफूले मान्ने देवी देवताप्रति गरिने पूर्ण भावनायुक्त समर्पण नै भक्ति हो । जहाँ पूर्ण श्रद्धा हुन्छ, पूर्ण निश्चिन्तता हुन थाल्दछ, त्यहाँ नै भक्ति हुने गर्दछ । भक्तिलाई शास्त्रहरूमा, आध्यात्मिक जगत्मा उच्च महत्त्व दिने गरिन्छ । कारण भक्तिबिना भगवान्को कल्पना नै गर्न सकिँदैन । भगवान्, देवी देवता, गुरुहरू भावनाको भोको हुनुहुन्छ न कि बाहिरी भौतिक चीजहरूको । भक्तिबाट नै भगवत् प्राप्ति सम्भव छ । त्यसैले मन्त्र साधनामा अगाडि बढ्ने प्रत्येक व्यक्तिले भक्तिलाई बुझ्नुपर्दछ ।

हुन त पूरै आध्यात्मिक क्षेत्र नै भक्तिमा अडेको छ । भक्तिभित्र अडेको भगवान्को कृपा, गुरुको कृपा शब्द चर्चाभन्दा धेरै पर छ । भक्तिलाई पूर्णताका साथ अँगाल्न सक्ने व्यक्ति नै यथार्थमा सच्चा भक्त हुन्छ । भक्त हुन गाह्रो छ । धेरै व्यक्तिले सामान्यरूपमा मान्दैमा म फलानो देवी देवता वा गुरुको भक्त हो भनेर बोलीचालीको भाषामा भन्ने गर्दछन् तर यथार्थमा भक्त हुनलाई धेरै परीक्षाहरू पार गरेको हुनुपर्दछ । भक्तलाई नै भगवान्ले परीक्षा लिन्छन् । आफूलाई दु:ख अप्ठयारो पर्दा, संघर्षहरू, प्रतिकूलताहरू आउँदा पनि भक्त आफ्नो भक्तिमा विचलित हुनु हुँदैन । आफूलाई समस्या पर्नासाथ, दु:ख, कष्ट आउनासाथ भावना नै बदल्ने, आफ्नो दृष्टिकोण नै परिवर्तन गर्ने साधक वा भक्तले केही प्राप्त गर्न सक्दैन । त्यस्तै आफ्ना इच्छित मनोकामनाहरू पूरा हुँदा, भौतिक सुख सम्पत्ति प्राप्त हुनासाथ आफ्नो भावनालाई नै बदल्ने साधक वा भक्तले पनि सच्चा भक्ति गर्न सक्दैन । यसैले साधनात्मकरूपमा अगाडि बढ्दै जाँदा अनुकूलताहरू पनि प्राप्त हुँदै जान्छन्, आफूमा सिद्धि शक्ति क्षमताहरू पनि आउँदै जान्छन् त्यस्तै प्रतिकूलता, संघर्षहरू पनि आउँदै जान्छन् । तर साधकले के होश पुऱ्याउनुपर्ने हुन्छ भने चाहे सुख आओस् वा दु:ख, दुवै परिस्थितिमा नअल्झिकन समभावमा बस्दै आफ्नो भक्तिलाई अटुटरूपमा राख्न सक्नुपर्दछ । जब हामीले भक्तिलाई निरन्तररूपमा अगाडि बढाउन सक्छौँ, त्यसैअनुसार मन्त्र साधनामा पनि हामीले सफलता प्राप्त गर्न सक्छौँ । इतिहासमा हेर्‍यौं भने पनि चाहे भक्त प्रह्लाद होस्, चाहे रामभक्त हनुमान्, चाहे अन्य नै किन नहुन्, सबैले दु:ख कष्ट प्रतिकूलतामा पनि आफ्नो ज्यानको बाजी राखेर भए पनि आफ्ना इष्टहरूप्रति भक्तिभाव राखेर सच्चा भक्तिको उदाहरण दिनुभएको छ । तब मात्र भक्तिबाट भगवत्प्राप्ति हुन्छ साधनामा ।

जय गुरुदेव !

# विप्र सुदामा

अति नै दरिद्र सुदामा भगवान् श्रीकृष्णचन्द्रका बालकककालका सखा थिए । दुवैले एकै गुरुकहाँ एकैसाथ पढेका थिए । सुदामा वेदका तत्त्वज्ञ, विषयमा विरक्त, शान्त र जितेन्द्रिय थिए । भगवान् श्रीकृष्णसँग यिनको निकै घनिष्ठता थियो । दीनहरूका साथ नै दीनबन्धुको यथार्थ मित्रता हुन्छ । यसैमा त भगवान्‌को यस नामको सार्थकता छ ! विद्या हासिलपछि दुवै मित्र आ-आफ्ना घर फर्के । भगवान् श्रीकृष्ण त द्वारकाका राजराजेश्वर बने भने उता बिचरा सुदामा एउटा भत्के बिग्रेको झुपडीका निवासी भए । उनको घरमा दरिद्रताले साक्षात् रूप लिएर बसेको थियो । तर दम्पत्तिले हरि भजन गर्दै सन्तोषले आफ्नो शुद्ध जीवन बिताउँथे । धनको लोभ त थिएन नै आवश्यक सामग्रीहरूका लागि पनि उनीहरू कसैसँग केही माग्दैन थिए ।

जीवनमा यस्तो समय पनि आयो उनीहरूले कैयौं दिनसम्म अन्नको मुखै देख्न पाएनन् । भोकले बिचरी ब्राह्मणीको मुख सुक्यो । बच्चाहरूको दशा देखेर उसको हृदय कम्पित भयो । उनले सोचिन् कि जगत्‌का एक मात्र निधि, सम्पूर्ण ऐश्वर्यका खानी भगवान् जसका मित्र हुन्, उनका लालाबालाले खान नपाएर प्राण त्याग्न पर्नु उचित छैन । उनले आफ्नो हृदयको भाव पतिलाई भन्न चाहिन् तर साहस गरिनन् । बच्चाहरू फेरि खानका लागि कराउन थाले, मातृस्नेह उठ्यो, दरिद्रपीडिता, दु:खी सती ब्राह्मणीले सहन सकिनन् । उनले डरले काँप्दै भए पनि पतिनजिक पुगेर विनयका साथ भनिन्– ' मलाई थाहा छ कि साक्षात् लक्ष्मीपति, शरणागतपालक भगवान् श्रीकृष्णचन्द्र हजूरका मित्र हुनुहुन्छ, हजूर उहाँकहाँ जानुहोस्, हजूर कुटुम्बी हुनुहुन्छ, हजूरलाई उहाँले अवश्यै प्रचुर धन दिनुहुनेछ । प्रभु ! मलाई थाहा छ हजूरलाई धनको रत्ती पनि इच्छा छैन । तर धनबिना गृहस्थीको निर्वाह हुनु बडो कठिन छ, अतएव मेरो विचारमा आफ्ना प्रिय मित्रकहाँ जानु नै उचित छ ।'

सुदामाले भने– 'लाटी, के तिमी धनका लागि मलाई त्यहाँ पठाउँछौ ? के ब्राह्मणले कहिल्यै धनको इच्छा गर्दछ र ? आफनो त काम नै भगवान्‌को भजन गर्नु हो । भोकै लागे भिक्षा माग्न सकिन्छ ।' ब्राह्मणीले भनी– मेरो फाटेको कपडा र भोकले छटपटाएका बालकहरूतिर हेर्नुहोस् । यस्तो दीन दशामा त्यहाँ गएर एकपटक उहाँसँग भेटेर त आउनुहोस् ।' सुदामाले अन्तमा यो विचार गरेर हिँड्ने सोच बनाए–

अयं हि परमो लाभ उत्तमश्लोकदर्शनम् ।

अर्थात् श्रीकृष्णचन्द्रको दुर्लभ दर्शनको परम लाभ हुन्छ । तर रित्तो हात कसरी जाने ? उनले आफ्नी स्त्रीसित भने–

'हे कल्याणि ! यदि केही कोसेली दिन योग्य सामग्री घरमा छ भने लिएर आऊ ।' घरमा कोशेलीको रूपमा लान सकिने केही थिएन । ब्राह्मणी चुप लागी । फेरि केही नदिईकन सुदामा हिँड्ने छैनन् भनी उनी बडो संकोचका साथ छिमेकी कहाँ गइन् । छिमेकीले पनि दया गरेर चार मुठी चामल दिए । ब्राह्मणीले त्यस चामललाई मैलो फाटेको कपडामा पोको पारेर पतिलाई दिइन् ।

सुदामा पोको लिएर द्वारकातिर हिँडे । धेरै दिनपछि प्रिय मित्रसँगको मिलनबाट हुने आनन्दको सुन्दर कल्पना गर्दै निष्काम भक्त सुदामा द्वारका पुगे । सुदामा त द्वारकाको भव्यता देखेर चकित भए ।

सुदामा महलको पहिलो द्वारमा पुगे । द्वारपालले सुदामालाई भने– 'हे द्विजराज ! तपाईं को हुनुहुन्छ र कोसँग भेट्नका लागि यहाँ आउनुभएको हो ?'

सुदामाले भने– 'मित्र श्रीकृष्णलाई भेट्न आएको ।'

सुदामाको मुखबाट भगवान्‌का लागि 'मित्र' शब्द सुनेर द्वारपालको बुद्धि घुम्यो, उसले सोच्यो कि कहीं ब्राह्मण पागल त भएनन् ? सर्वेश्वर भगवान्‌लाई यस्तो नाङ्गो-भोको ब्राह्मणले मित्र भनेर कसरी भन्न सकेको ! ब्राह्मणलाई

आदरसहित त्यहाँ बसाएर द्वारपाल भित्र गयो । द्वारपालको मुखबाट सुदामाको नाम सुन्नेबित्तिकै भगवान् श्रीकृष्णको सुद्धि हरायो । मुकुट त्यहीं रहन गयो, पीताम्बर खस्न पुग्यो, पादुका पनि लाउन नभ्याई दौडनुभयो र सुदामाको चरणमा गएर लुटपुटिनुभयो ।

आज भक्त र भगवान्का प्रिय मित्रको रूपमा श्रीकृष्णसँग मधुर मिलन भइरहेको थियो । कृष्ण, सुदामा दुवैको आँखाबाट झरेको आँसुको धाराले गंगा, गोदावरीले भन्दा अधिक कल्याणकारी भएर जगत्लाई पावन गरिरहेको लाग्थ्यो । महाराजका सहस्र रानीहरू, द्वारकाबासी नरनारीहरूले ब्राह्मणको सौभाग्यको सराहना गरे । देवता चकित र मुग्ध भएर लीलमयको प्रेमलीला हेरिरहेका थिए । भगवान्ले कतै आफ्ना सर्वस्व सुदामालाई दिनुहुने पो हो कि भनेर देवराज इन्द्र, कल्पवृक्ष, कुबेर र सुमेरु आत्तिरहेका थिए । ऋषिमुनि र भक्तगण भक्तवत्सल भगवान्को मिलनरीतिलाई देखर प्रमुदित भइरहेका थिए ।

प्रभुले आफ्नो आँसुको धाराले नै सुदामाको पद पखाल्नुभयो र उनलाई छातीमा लगाउनुभयो । धेरै बेरसम्म पनि सुदामालाई आफ्नो छातीबाट सुदामालाई अलग नगर्नु भएपछि असंख्य मानिसहरूको भीड लाग्न पुग्यो । अन्तमा उद्धव र अक्रूरादिले आएर भगवान्सँग प्रार्थना गरे । तब भगवान्ले सुदामालाई अङ्गालो हालेर उनलाई अन्तःपुरमा लिएर जानुभयो ।

सर्वाङ्गसुन्दर दिव्य महलमा सुदामा पुगे । भगवान् अच्युतले प्रिय बन्धु सुदामालाई आदरसहित लिएर गएर आफ्नो दिव्य पलङ्गमा बसाउनुभयो र पूजनको सामग्री स्वयं आफ्नै हातले संग्रह गरेर उनको चरणलाई धोएर त्यस जललाई स्वयं त्रिलोकपावन भएर पनि आफनो निधारमा धारण गर्नुभयो । भगवान्ले आफ्ना परम मित्रको शरीरमा दिव्य गन्धयुक्त चन्दन, कुंकुम आदि लगाइदिनुभयो र सुगन्धित धूप, दीप इत्यादिले पूजन गरेर उनलाई दिव्य भोजन गराउनुभएर पान-सुपारी दिनुभयो । ब्राह्मण सुदामाको शरीर अत्यन्त मलीन र क्षीण थियो ।

तर भगवान्को प्रिय सखा भएकोले साक्षात् लक्ष्मीकी अवतार रुक्मिणी आफ्ना सखी देवीहरूसहित रत्नदण्डयुक्त व्यञ्जन, चमर हातमा लिएर परम दरिद्र भिक्षुक ब्राह्मणको बडो सदिच्छापूर्वक सेवा-पूजा गर्न लाग्नुभयो ।

भगवान्ले प्रिय मित्रतिर प्रेमपूर्ण दृष्टिले हेर्नुभयो र हाँसेर भन्नुभयो– 'मित्र, तिमीले मेरो लागि केही कोसेली पनि ल्याएका छौ कि ?'

सुदामाले शिर झुकाए । सब प्राणीहरूको अन्तरको कुरा थाहा पाउने हरिले आफ्ना निकट ब्राह्मणको आउनाको कारण बुझेर विचार गर्नुभयो कि यो निष्काम भक्त र सखा हो । धनको कामनाले यसले मेरो पहिले कहिल्यै पनि भजन गरेन, न अहिले नै यसमा कुनै प्रकारको कामना छ, त्यसैले यसले चामलको कोसेली दिन चाहँदैन तर यो आफ्नी पतिव्रता पत्नीको आग्रहले गर्दा मकहाँ आइपुग्यो, त्यसैले म यसलाई त्यो (भोग र मोक्षरूप) सम्पत्ति दिन्छु जुन देवताहरूका लागि पनि दुर्लभ छ ।'

यस्तो विचार गरेर भगवान्ले 'यो के हो ?' भनेर हतारमा सुदामाको हातबाट चामलको पोको जबर्जस्ती झिक्नुभयो ।

फुरानो फाटेको कपडा थियो, पोको फुटिहाल्यो र चामल चारैतिर छरिन पुग्यो । भगवान्ले बडो प्रेमपूर्वक त्यसलाई बटुलेर भन्न लाग्नुभयो–

'हे सखे ! यही त मलाई अत्यन्त प्रसन्न गर्ने प्यारो कोसेली हो । यस चामलले मलगायत समस्त विश्वलाई तृप्त गर्नेछ ।' यसो भनेर एक मुठ्ठी चामल चपाउनुभयो र यसको दिव्य स्वादको सराहना गर्न लाग्नुभयो । खानलाई तुरुन्त अर्को मुठ्ठी भर्नुहुँदा नजिकै बस्नुभएकी हरिचरणकमलकी नित्यकिङ्करी, अनन्याश्रया लक्ष्मीरूपिणी जगज्जननी श्रीरुक्मिणीले परब्रह्म भगवान् यदुनन्दनको हात समात्नुभयो ।

'हे विश्वरूप ! बस भयो । हजूरको यति प्रसन्नता नै मनुष्यको सबैभन्दा उच्च श्रीवृद्धिका लागि यथेष्ट छ । मेरो कृपाले मिल्ने यस लोक र परलोकका हजूरद्वारा रचित सबै प्रकारका सम्पत्ति अथवा ऐश्वर्य यस ब्राह्मणलाई यस एक मुठ्ठी चामलबाट नै प्राप्त हुन गएको छ ।

सुदामा केही समयसम्म त्यहाँ रहे । भगवान्ले आफ्नी रानीहरूसहित उनको ठूलो सेवा गर्नुभयो । श्रीकृष्णमिलनको अतुल सुख भोगेर सुदामा भगवान्को आज्ञा लिएर घरतिर हिँडे । श्रीकृष्णमहाराजले उनलाई केही धन पनि दिनुभएन न सुदामाले नै उहाँसँग केही मागे । उनी त श्रीकृष्णको दर्शन पाएर परम आनन्दमा विलय भएका थिए । तर स्त्रीको भनाइ मानेर उनलाई आउन परेको हुनाले उनी यस कृपणतामाथि बडो लज्जित भइरहेका थिए । मनमनै सुदामा सोचिरहेका थिए– 'श्रीहरिको चरणको सेवाले मनुष्यलाई स्वर्ग, मोक्ष, यस लोकको महान् सम्पत्ति र सबै प्रकारका सिद्धिहरू प्राप्त हुन्छन् । तथापि परम कृपालु भगवान्ले 'यो निर्धन ब्राह्मण धन पाएर अत्यन्त गर्वित भएर मेरो स्मरण गर्दैन भनेर मलाई धन दिनुभएन ।'

यही त भक्तको भावना हो, जो धन नमिल्नाले भगवान्लाई गाली गर्दछ, ऊ त धनको भक्त हो । भगवान्लाई त यस्ता मानिसहरूले धनको साधन बनाउन चाहेका छन् । जगत्का मानिसहरूले एकपटक सुदामाको हृदयतिर आँखा उठाएर हेर्नु आवश्यक भएको छ । जय गुरुदेव !

# गुरुभक्त बालक उपमन्यु

महर्षि आयादधौम्य आफ्नो विद्या, तपस्या र विचित्र उदारताका लागि अत्यन्त प्रसिद्ध हुनुहुन्थ्यो । बाहिरीरूपमा आफ्ना शिष्यहरूप्रति अत्यन्तै कठोर देखिए पनि भित्रीरूपमा शिष्यहरूप्रति उहाँको अपार स्नेह थियो । उहाँ आफ्ना शिष्यहरूलाई अत्यन्तै सुयोग्य बनाउन चाहनुहुन्थ्यो । त्यसैले ज्ञानका सच्चा जिज्ञासुहरू महर्षिकहाँ श्रद्धापूर्वक रहन्थे । महर्षिका शिष्यहरूमध्ये एक बालकको नाम उपमन्यु थियो । गुरुले उपमन्युलाई आफ्नो गाई चराउने काम दिएर राख्नुभएको थियो । उनी दिनभरि वनमा गाई चराएर साँझ आश्रममा फर्किन्थे । एकदिन गुरुले सोध्नुभयो– 'पुत्र, आजभोलि भोजन के गर्छौ ?'

नम्रतापूर्वक उपमन्युले भने– 'भगवन् ! मैले भिक्षा मागेर काम चलाउँछु ।'

महर्षिले भने– 'वत्स ! ब्रह्मचारीले यसप्रकार भिक्षाको अन्न खान हुँदैन । भिक्षा मागेर जे प्राप्त हुन्छ, त्यसलाई गुरुको सामु राखिदिनुपर्दछ । त्यसबाट गुरुले यदि केही दिनुभयो भने त्यसलाई ग्रहण गर्नुपर्दछ ।'

उपमन्युले महर्षिको आज्ञालाई स्वीकार गरे । उनले भिक्षा मागेर जे जति प्राप्त हुन्छ त्यसलाई गुरुको सामु ल्याएर राखिदिन्थे । गुरुदेवले त शिष्यको श्रद्धालाई दृढ बनाउनुपर्ने थियो । गुरुले भिक्षाको सबै अन्नलाई आफूसँग राख्नुहुन्थ्यो । त्यसबाट केही पनि उपमन्युलाई दिनुहुन्नथ्यो । केही दिनपछि गुरुदेवले सोध्नुभयो– 'उपमन्यु, तिमी हिजोआज के खान्छौ ?' तब उपमन्युले भने 'म एकपटकको भिक्षाको अन्न गुरुदेवलाई चढाएर अर्कोपटक आफ्नो लागि भिक्षा माग्दछु ।' महर्षिले भन्नुभयो– 'दुईपटक भिक्षा माग्नु त धर्मको विरुद्ध छ । यसबाट गृहस्थहरूमाथि अधिक भार पर्दछ र दुईपटक भिक्षा माग्नेहरूलाई संकोच पनि हुन्छ । अब तिमीले दुईपटक भिक्षा माग्ने काम बन्द गर ।'

उपमन्युले भने– 'जो आज्ञा !' उनले दुईपटक भिक्षा माग्न छाडिदिए । केही दिनपछि महर्षिले फेरि सोध्दा उपमन्युले आफूले गाईको दूध पिउने गरेको बताए ।

महर्षिले भन्नुभयो– 'यो त ठीक भएन । गाई जसको हो, दूध पनि उसैको हुन्छ । मलाई नसोधी तिमीले गाईको दूध पिउनु हुँदैन ।'

उपमन्युले दूध पिउन पनि छोडिदिए । केही दिन बितेपछि गुरुदेवले सोध्नुभयो– 'उपमन्यु, तिमी दुईपटक भिक्षा पनि माग्दैनौ र गाईको दूध पनि पिउँदैनौ भने के खान्छौ ? तिम्रो शरीर त उपवास गर्नेको जस्तो दुर्बल देखिँदैन ।'

उपमन्युले भने– 'भगवन् ! म बाच्छाहरूको मुखबाट निस्केको फिँज पिएर बाँचिरहेको छु ।'

महर्षिले भने– 'बाच्छाहरू धेरै दयालु हुन्छन् । उनीहरूले आफू भोको रहेर पनि तिम्रो लागि फिँज निकाल्न सक्छन्, तिम्रो यो वृत्ति पनि उचित छैन ।'

अब भने उपमन्युले उपवास शुरु गर्न लागे । दिनभरि केही पनि नखाएर गाईहरू चराउँदै उनले वन-वन जानुपर्दथ्यो । अन्तमा जब भोक असह्य भयो तब उनले आँकको पात खाए । विषालु पात खाँदा उनको शरीरमा विष फैलिन गयो । उनी अन्धा भए । अब केवल गाई हिँडेको शब्द सुनेर नै उनी गाईहरूको पछि लागिरहेका थिए । बाटोमा एउटा पानी सुकेको इनार थियो । उपमन्यु त्यहीँ खसे । महर्षिलाई चिन्ता लाग्यो । उहाँले सोच्न थाल्नुभयो– 'मैले त्यो सोझो बालकको भोजन सबै प्रकारले बन्द गरिदिएँ । कष्ट पाउँदा पाउँदा दुःखी भएर त्यो त भाग्यो कि !' महर्षि उनलाई खोज्न जङ्गलमा निक्ले । उनले लगातार पुकार्न लागे– 'पुत्र उपमन्यु ! तिमी कहाँ छौ ?'

उपमन्युले इनारभित्रबाट जवाफ दिए– 'भगवन् ! म इनारमा खसेको छु ।' महर्षि समीप आउनुभयो र सबै कुरा सुनेर ऋग्वेदको मन्त्रबाट उनलाई अश्विनीकुमारको स्तुति गर्ने आज्ञा दिनुभयो । उपमन्युले सस्वर श्रद्धापूर्वक स्तुति गरे पछि देवताहरूका वैद्य अश्विनीकुमार त्यस इनारमा प्रकट हुनुभयो । उहाँहरूले उपमन्युको आँखा ठीक पारिदिनुभयो र उनलाई प्रसादको रूपमा पुवा खान दिनुभयो । तर उपमन्युले गुरुदेवलाई अर्पण नगरीकन त्यो पुवा खान मानेनन् । अश्विनीकुमारले सम्झाउँदै भन्नुभयो– 'संकोच नगर । तिम्रा गुरुले पनि आफ्ना गुरुलाई अर्पित नगरीकनै हामीले दिएको पुवा प्रसाद मानेर खानुभएको थियो ।'

उपमन्युले भने– 'उहाँ मेरा गुरु हुनुहुन्छ, उहाँले जे गर्नुभए पनि उहाँको आज्ञालाई म टाल्न सक्तिन ।' यसप्रकारको गुरुभक्तिबाट प्रसन्न भएर अश्विनीकुमारले उनलाई सबै विद्या नपढी प्राप्त हुने आशीर्वाद दिनुभयो । जब उपमन्यु इनारबाट बाहिर निस्के, महर्षि आयोदधौम्यले आफ्नो प्रिय शिष्यको रूपमा स्वीकार्दै उनलाई आफ्नो हृदयमा टाँस्नुभयो ।

जय गुरुदेव !

# भव्य भक्ति गुरुभक्ति

सबैमा भक्ति छ तर गुरुमा छैन भने त्यस भक्तिलाई पूर्ण भक्ति मान्न सकिन्न किनकि गुरुको भक्तिबिना हामीलाई जतिसुकै ज्ञान प्राप्त भए पनि त्यो सागरको पानी खाए जस्तै नुनिलो नै हुन्छ । गुरु भक्तिबाट सागरको पानीको नुनिलोपना हटेर त्यसको स्वाद अत्यन्त निर्मल र स्वादिलो हुन्छ । संसारको अन्धकारबाट उज्यालोतर्फ लाने भक्तिमा सर्वोत्कृष्ट भएर संसारमा अमीट छाप र प्रभाव छोड्ने भक्तहरूलाई केलाउनु पर्दा मीरा, बालक ध्रुव, प्रल्हादजस्ता शीर्षस्थ व्यक्तित्वहरूको नाम हाम्रो मानसपटलबाट कहिल्यै पनि हट्दैन । उनीहरूको भक्तिको चरमोत्कर्षले गर्दा नै आज हामीलाई पनि गुरुभक्तितिर लाग्ने प्रेरणा प्राप्त भइरहको छ ।

गुरुमा भक्ति भएको व्यक्तिलाई कुनै पनि कुरा असाध्य हुँदैन । गुरुभक्तिमा समर्पित व्यक्तिको लागि जे पनि सम्भव हुन्छ । जसमा गुरुप्रतिको भक्तिभाव बढी छ उसको त स्मरण मात्रले पनि हाम्रा कल्मष हटेर जान्छन् भनी शास्त्रले भनेको पाइन्छ । अहिले जति पनि सन्त, महापुरुष, ज्ञानीहरू हामीले संसारमा देख्छौं, उहाँहरू सबै यस स्थितिसम्म उठ्न सक्नुमा उहाँहरूको गुरुभक्ति हो । गुरुभक्तिबाट नै स्वामी विवेकानन्द, स्वामी रामतीर्थ, स्वामी योगानन्दजीहरू आ-आफ्नो व्यक्तित्वको चरमचुलीमा पुग्न सफल भए । गुरुको भक्ति त साक्षात् नारायणका अवतार भगवान् राम र भगवान् कृष्णले पनि गर्नुभयो र गुरुको शिक्षा दीक्षाबाट उहाँहरूले पनि संसारमा आफूलाई गुरु शिष्य परम्पराको अग्रणी बनाउन सफल हुनुभयो । साक्षात् परमात्मा भगवान् कृष्णले आफ्ना गुरु सान्दीपनको सहचर्यमा बसेर आफूमा सिद्धि, शक्ति र चातुर्यताको भण्डार नै भर्नुभयो ।

पौराणिककालका कतिपय कालखण्डहरू गुरुको भक्तिले ओतप्रोत छन् । गुरुको भक्तिबिनाको त्यतिबेला कल्पना पनि हुँदैन थियो । गुरुको ईशारामा नै त्यतिबेलाको राजपाट चल्दथ्यो । राजाको गुरुमाथिको भक्ति, प्रजाको गुरुमाथिको भक्ति, सारा सैनिकहरूको गुरुप्रतिको भक्तिले गर्दा नै त्यतिबेलाको राजपाट अहिलेको जस्तो अव्यवस्थित र मनपरी हुँदैन थियो । गुरुको डरले गर्दा पनि त्यतिबेलाको शासन व्यवस्थामा कुनै पनि किसिमको कमी-कमजोरी हुन पाउँदैन थियो । गुरु नै सर्वेसर्वा हुनाले सारा शासन व्यवस्था सुदृढ, व्यवस्थित थियो । स्वार्थको लेश मात्र पनि हुँदैन थियो । सम्पूर्ण क्षेत्रमा गुरुको आशीर्वादले गर्दा उन्नति, प्रगति, हुन्थ्यो । लडाइँ पनि गुरु आज्ञाअनुसार हुन्थ्यो र गुरुको आज्ञाविपरीतको

कुराहरूले कुनै सफलता नपाएको दृष्टान्त हामीले पढी-सुनी आएकै छौं ।

तर वर्तमान अवस्था बडो नाजुक छ । गुरुप्रतिको भक्तिको न्यूनताले गर्दा सबै क्षेत्र चौपटजस्तै मृतप्राय: भइरहेको छ । एकाध संघ, संस्था र व्यक्तिबाट मात्र गुरुभक्तिको बखान गर्ने, मानिसलाई गुरुतिर डोऱ्याउने गर्दा अपेक्षित लाभ पनि प्राप्त हुन सकिरहेको छैन । अलिअलि गुरुभक्तिको अवस्था देखिए पनि अधिकांशमा त भौतिकतालाई रसास्वादन गर्ने अभिलाषाले मात्र गुरुमा भक्ति रहेको देखिन्छ । बाह्य व्यवहारले गुरुभक्तिलाई आँक्न सकिन्न । बाह्य व्यवहारहरू, गुरुको अगाडि सुकिला, फरासिला भएर जाँदैमा पनि गुरुभक्तिको सीमा तोक्न सकिन्न । यसको सीमा तोक्ने, कसमा कति गुरुभक्ति छ भन्ने कुरा भावनाको कुरा हो । भावनामा नै गुरुको भक्तिको खेतीले फस्टाउने मौका पाउँछ र यसै खेतीमा गुरुका आशीर्वादहरूले मौलाउने मौका पाउँछन् । केवल बाहिरीरूपमा गुरुभक्त बन्ने नाटक गर्नु आफूले आफैलाई धोका दिनु हो । वास्तवमा जब हाम्रो मन इमान्दारीपूर्वक गुरुको चरणमा लाग्दछ, गुरु नै अन्तिम सत्य हो र उहाँमा समर्पित भएमा मात्र हाम्रो वास्तविक उद्धार सम्भव छ भन्ने कुरा हामीलाई थाहा हुन सकेमा हामीमा गुरूप्रतिको शुद्ध भक्ति देखिन थाल्छ । यही शुद्ध भक्तिमा नै हाम्रो सर्वत्र उन्नति प्रगति रहन्छ । हाम्रो विपत्ति त त्यतिबेला हुन्छ जब हामीले गुरुको सुमिरण गर्दैनौ, उहाँको भजन गर्दैनौं । श्रीरामचरितमासमा भनिएको छ–

**कह हनुमंत विपति प्रभु सोई**
**जब तव सुमिरण भजन न होई ।**

हामीमा विपत्तिले त्यतिबेला मात्र घेर्दछ जब हामी गुरुको स्मरण, भजन र सुमिरण गर्दैनौं । यदि हरेक क्षण उहँको स्मरण र सुमिरण भयो भने हाम्रो प्रत्येक क्षण सम्पदाप्रदायक हुन्छ ।

गुरुको भक्तिको पराकाष्ठाको एउटा ज्वलन्त उदाहरण हेरौं । एकलव्यले द्रोणाचार्यलाई मनमनै गुरु मानेका थिए । निषादराज हिरण्यधनुका पुत्र एकलव्यमा गुरुप्रतिको ठूलो भक्ति थियो । गुरुले उनलाई धनुर्विद्या सिकाउन नसकिने बताउनुहुँदा पनि उनले माटोको गुरुमूर्ति बनाएर त्यसको अगाडि नै धनुर्विद्याको अभ्यास गर्थे । साँचो रूपमा गुरुप्रति श्रद्धा, विश्वास र समर्पित भएर धनुर्विद्यामा अभ्यस्त रहनाले उनी एकदिन महान् धनुर्धर भए । गुरुप्रतिको दृढ निश्चय र भक्तिले गर्दा नै उनी यसमा सफल हुन पुगे ।

उनको गुरुभक्ति मात्रै यति थिएन । गुरुप्रतिको उनको पूर्ण समर्पण भाव त्यतिबेला मात्र देखियो जब गुरुले उनीसँग दाहिने हातको बूढी औँला गुरु दक्षिणाको रूपमा लिन चाहनुभयो । दाहिने हातको बूढी औँलाबिना त उनी धनु चलाउन नसक्ने हुने कुरालाई जानेर पनि उनले सहर्ष गुरुलाई औँला काटेर दान दिए । गुरुप्रतिको उनको भव्य त्याग र भक्तिले सन्त र भक्तहरू पनि उनको यशोगान गाउँछन् ।

हामीले पनि एकलव्यले जस्तै गुरुप्रति भक्ति, त्याग, समर्पण भाव राख्न सक्यौं भने एकदिन हाम्रो पनि यशोगान दुनियाँले गाउनेछ । त्यसैले आजैदेखि गुरुप्रति भक्ति जगाऔं र एकलग्व्य जस्तै उच्चतातिर पुगौं ।

# तनाव मुक्तिको सशक्त माध्यम भक्ति संगीत

'भजन' वा 'कीर्तन'को उल्लेख हिन्दु र सिख धर्ममा पाइन्छ । भक्तिभावका साथ भजन गाउने, आफ्ना आराध्यदेवको स्तुति गर्ने र उहाँलाई रिझाउने, मनाउने विधि नै भजन हो । भजनको मूल उद्‌भव सामवेदका ऋचाहरूमा देखिन्छ । यी ऋचाहरू संस्कृत श्लोकबाट अलग छन् । यी भजनहरू गाउने आफ्नै शैली छ । परम्परागत रूपमा भजन शास्त्रीय सङ्गीतसँग सम्बन्धित भएको पाइन्छ । 'ध्रुपद शैली'मा भजन गायनको एउटा लामो परम्परा रहेको पाइन्छ । भजनमा भक्त समूहले सन्त, देवीदेवताको विस्तृत कथालाई संक्षिप्त रूपमा गाएर सुनाइन्छ ।

जुन संगीत कानलाई प्रिय लाग्ने हुन्छ, विशुद्ध रूपमा आध्यात्मिक छ, जसमा भक्तका श्रद्धेय भगवान्‌को गुणगान भएको छ यस्तो पावन संगीत नै भजन हो । भजन आत्म निवेदनको एउटा प्रकार हो । भगवान्‌प्रति आफ्नो प्रेमलाई व्यक्त गर्ने एउटा यस्तो माध्यम हो जसमा आत्माको परमात्मासँग मिलनको सदाशयता राखिन्छ । भजन आराध्यदेवको स्तुति गर्ने शैली हो जसमा देवताहरूको जीवनका कथाहरूलाई गाएर तथा उहाँहरूको जीवनबाट प्राप्त हुने उपदेशहरूलाई विषयवस्तु बनाइएर सबैलाई भजनमार्फत बताइन्छ । तुलसी, सूर, मीरा, कबीरा आदि मध्ययुगीन कालका कविहरूले अनेक भजन लेखे जुन आज पनि उत्तिकै प्रिय छन् ।

भक्त कविहरू राम्रा समाज सुधारक पनि सिद्ध भएका छन् । समाजलाई परिवर्तन गर्न नवचेतना जगाउने कार्य भक्त कविहरूले आफ्नो भजनको माध्यमबाट अत्यन्तै राम्रोसँग गरेका छन् । आजभोलि भजन 'तनाव मुक्ति'को एउटा सशक्त माध्यम बनेको छ । भजनले अनुपम मानसिक शान्ति दिन्छ । भजनको शब्द, तान, त्यसको गेय शैली र पुनरावृत्तिले हामीलाई एउटा यस्तो अनुभूति दिन्छ जसले हामीलाई 'शाश्वत् लोक'मा लैजान्छ, सबै लौकिक बन्धनहरूबाट मुक्त गरेर अर्कै लोकमा लिएर जान्छ जहाँ व्यक्ति निर्भय र मुक्त हुन जान्छ ।

# शबरीको भक्ति

त्रेतायुगको समय थियो । वर्णाश्रम धर्मको पूर्ण प्रतिष्ठा थियो। वनमा स्थान-स्थानमा ऋषिहरूका पवित्र आश्रम बनेका थिए । तपोधन ऋषिहरूको यज्ञधूमबाट सर्वत्र आच्छादित वातावरण हुन्थ्यो भने वेदध्वनिले आकाश मुखरित हुन्थ्यो । यस्तो समयमा दण्डकारण्यमा पति-पुत्रविहीन भक्ति र श्रद्धाले सम्पन्न शबरी नामक एउटी वृद्धा भिल्लनी बस्दथिन् ।

शबरीले एकदिन मतङ्ग ऋषिको दर्शन गरिन्। सत्दर्शनले उनलाई परम हर्ष भयो र उनले विचार गरिन् कि यदि मलाई यस्ता महात्माहरूको सेवा गर्ने अवसर प्राप्त भएमा मेरो कल्याणमा कुनै आश्चर्य हुने छैन । यस्तो सोचेर उनले ऋषिहरूको आश्रमबाट केही पर आफ्नो सानो कुटी बनाइन् र कन्दमूल र फलबाट आफ्नो भोक शान्त गर्दै आफूलाई नीच मानेर अप्रकट रूपले ऋषिहरूको सेवा गर्न लागिन् । जुन बाटो भएर ऋषिहरू स्नान गर्न जानुहुन्थ्यो त्यस ठाउँमा उनले बिहान सबेरै कुचो लगाएर सफा सुग्घर गरेर राख्दथिन् जसबाट उक्त स्थानमा स-साना ढुङ्गा वा काँडा रहन पाउँदैनथे । यसका अलावा उनी आश्रमको नजिक प्रात:कालमा नै सुख्खा दाउराको थुप्रो लगाउँथिन् । जताततै ढुङ्गा र काँडाले युक्त बाटोलाई एकदमै सफा र स्वच्छ भएको देखेर ऋषिहरूलाई ठूलो आश्चर्य भयो र उहाँहरूले आफ्ना शिष्यहरूलाई प्रतिदिन यसप्रकारले सफा गर्ने को रहेछ भनी पत्ता लगाउन अह्राउनुभयो । आज्ञाकारी शिष्यहरूले राति पालो बसेर चियो गर्न थाले । एकदिन रातको पछिल्लो पहरमा शबरी दाउराको भारी बिसाइरहेको अवस्थामा समातिइन् । उनी एकदमै डराइन् । शिष्यगणले उनलाई लिएर मतङ्ग मुनिका छेउ पुगे र उनीहरूले मुनिलाई भने, "महाराज ! प्रतिदिन बाटो सफा गर्ने र दाउराको भारी राखेर जाने चोरलाई आज हामीले समात्यौं । यो भिल्लनीले नै प्रतिदिन यस्तो कार्य गर्दछिन् ।" शिष्यहरूको कुरा सुनेर भयभीत भिल्लनीलाई मुनिले सोध्नुभयो, "तिमी को हौ र किन सधैं बाटो सफा गर्छौ ?" भक्तिमती शबरीले थरथर काँप्दै अत्यन्त विनयपूर्वक प्रणाम गरेर भनिन्, "नाथ ! मेरो नाम शबरी हो । मन्दभाग्यले गर्दा मेरो जन्म नीच कुलमा हुन गयो, म यसै वनमा बस्दछु । हजूरहरूजस्ता तपोधन मुनिहरूको दर्शनबाट आफूलाई पवित्र गर्दछु । अन्य कुनै प्रकारको सेवामा आफूलाई अधिकारविहीन सम्झेर मैले यस्तो प्रकारको सेवामा नै मन लगाएकी हुँ । भगवान् ! म तपाईंको सेवाको योग्य छैन । कृपापूर्वक मेरो अपराध क्षमा गरिदिनुहोला ।" शबरीका यी दीन एवं यथार्थ वचन सुनेर मुनि मतङ्गले दयावश आफ्ना शिष्यहरूलाई अह्राउनुभयो, "यिनी धेरै भाग्यवती छिन्, यिनलाई आश्रम बाहिरको एउटा कुटीमा बस्न देऊ र अन्नादिको उचित व्यवस्था गर ।" ऋषिको दयापूर्ण वचन सुनेर शबरीले हात जोडेर प्रणाम गरेर भनिन्, "कृपानाथ ! म त कन्दमूलबाट नै आफ्नो पेट भर्दछु । तपाईंको अन्नप्रसाद मलाई यसकारण मन पर्दछ कि यसबाट मलाई हजूरको वास्तविक कृपा प्राप्त हुन्छ जसबाट म कृतार्थ हुनेछु। मलाई न वैभवको इच्छा छ, न त मलाई यो निसार संसार नै प्रिय लाग्दछ । दीनबन्धो ! मलाई त हजूरले यस्तो आशीर्वाद दिनुहोस् जसबाट मेरो भगवान्मा प्रीति रहोस्।" विनयी श्रद्धालु शबरीको यस्तो वचन सुनेर मुनि मतङ्गले केही बेर विचार गरेर प्रेमपूर्वक उनलाई भन्नुभयो, "कल्याणी ! तिमी निर्भय भएर यहाँ बसेर भगवान्को नामको जप गर।" ऋषिको कृपाबाट शबरी जटा-चिर-धारणी भएर भगवद्भजनमा निमग्न रहेर आश्रममा रहन लागिन् । तर अन्य ऋषिहरूलाई यो कुरा मन परेन । उनीहरूले मतङ्ग ऋषिलाई भने– "तपाईंले नीच जातिकी स्त्रीलाई आश्रममा

स्थान दिनुभयो, त्यसैले हामी तपाईंसँग बसेर भोजन गर्नु त के, बोल्न पनि चाहँदैनौं ।" भक्ति तत्त्वका मर्मज्ञ मतङ्गले यस्ता शब्दप्रति कुनै ध्यान दिनुभएन । उहाँ यस कुरालाई जान्नुहुन्थ्यो कि उनीहरू सबै भ्रममा छन्, शबरीको स्वरूपको यिनीहरूलाई कुनै ज्ञान छैन, शबरी केवल नीच जातिकी साधारण स्त्री मात्र होइनन्, उनी त एक भगवद्भक्तिपरायणा उच्च आत्मा हुन् । उहाँले निरन्तर आफ्नो उपदेशबाट शबरीको भक्तिभाव अझ बढाउँदै लानुभयो ।

यसप्रकार भगवद्गुण-स्मरण र गान गर्दागर्दै धेरै समय बित्यो । मतङ्ग ऋषिले शरीर छोड्ने इच्छा गर्नुभयो । यो थाहा पाएर शिष्यहरूलाई निकै कष्ट हुन गयो । शबरी अत्यन्त क्लेशका कारण रुन कराउन थालिन् । गुरुदेवको परमधाम हुनु उनको लागि निकै नै असहनीय हुन गयो । उनले भनिन्, "नाथ ! हजूर एक्लै मात्र नजानुहोस्, यो तुच्छ भक्तिनी पनि तपाईंका साथ जान तयार छे ।" भक्तिमती शबरीलाई सम्मुख देखेर मतङ्ग ऋषिले भन्नुभयो, "सुव्रते ! तिमी यस विषादलाई छोडिदेऊ । कोसलकिशोर भगवान् श्रीरामचन्द्र यसबेला चित्रकूटमा हुनुहुन्छ । उहाँ यहाँ अवश्यै पाल्नुहुनेछ । उहाँलाई तिमी यिनै चर्मचक्षुद्वारा प्रत्यक्ष देख्न सक्नेछौ, उहाँ साक्षात् परमात्मा नारायण हुनुहुन्छ । उहाँको दर्शनबाट तिम्रो कल्याण हुनेछ । भक्तवत्सल भगवान् जब तिम्रो आश्रममा पाल्नुहुन्छ तब उहाँको उचित प्रकारले आतिथ्य गरेर आफ्नो जीवनलाई सफल गर्नू । तबसम्म तिमीले श्रीराम नाम जप गर्दै उहाँको प्रतीक्षा गरेर बस्नू ।"

शबरीलाई यसप्रकार आश्वासन दिएर मुनि दिव्यलोक जानुभयो । यता शबरीले श्रीराम नाममा यस्तो मन लगाइन् कि उनलाई अन्य कुरामा ध्यान नै रहेन । शबरी कन्दमूल र फलहरूमा आफ्नो जीवन निर्वाह गर्न लागिन् । दिन बित्दै जाने क्रममा शबरीको रामदर्शनको लालसा पनि प्रबल भएर गयो । केही शब्द मात्र सुने पनि उनी दौडेर बाहिर आउँथिन् र अति आतुरताका साथ प्रत्येक वृक्ष, लता, पत्र, पुष्प र फलहरूसँग र पशु-पक्षीसँग सोध्दथिन्– "अब श्रीराम कति टाढा हुनुहुन्छ, यहाँ कहिले आइपुग्नुहुन्छ ?" प्रात:काल भन्थिन् कि भगवान् आज साँझ आउनुहुन्छ । साँझपख फेरि भन्थिन्, भोलि बिहान त अवश्यै पाल्नुहुन्छ । कहिले भित्र आउँथिन् भने कहिले बाहिर । रामको कोमल श्रीचरणकमलमा चोट नलागोस् भनेर बराबर बाटो सफा गर्थिन्, काँडा र ढुङ्गालाई पन्छाउँथिन् । घरलाई नित्य गोबर-गोमूत्रले लिपपोत गरी ठीक राख्दथिन् । सधैं नयाँ माटो-गोबरको चौकी बनाउँदथिन् । कहिले उठ्दथिन्, कहिले बाहिर जान्थिन् र सोच्थिन् कि भगवान् बाहिर पाल्नुभइसक्यो । वनमा जुन रूखको फल अधिक स्वादिलो र मीठो लाग्थ्यो, त्यही नै आफ्ना रामका लागि बडो चाखले राख्दथिन् । यसप्रकार शबरी राजीवलोचन रामको शुभ दर्शनको उत्कण्ठाले पागलजस्तै भइन् । वृक्षको सुकेको पात झरेर आवाज मात्र निस्कँदा पनि त्यस आवाजलाई श्रीरामको पदचाप ठानेर दौडन्थिन् । यसप्रकार आठै प्रहर उनको चित्त श्रीराममा रमाउन लाग्यो । तर राम आउनुभएन । एकपटक मुनिबालकहरूले भने, "शबरी ! तिम्रा राम आउनुभएको छ ।" फेरि के थियो र ? बयर आदि फलहरूलाई आँगनमा राखेर तलाउबाट जल लिन दौडिन् । त्यही बेला एकजना ऋषि स्नान गरेर फर्किरहनुभएको थियो । शबरीले उनलाई देखिनन् र उनको ऋषिसँग स्पर्श हुन पुग्यो । मुनि अति नै क्रुद्ध भए । उनले भने, "कस्ती दुष्ट रहिछ ! जानीजानी हाम्रो अपमान गर्दिरहिछ ।" शबरीले आफ्नो धुनमा ऋषिका कुरा केही सुनिनन् र उनी तलाउमा गइन् । ऋषि पनि पुन: स्नानका लागि उनको पछिपछि गए । ऋषि जब जलमा प्रवेश गरे तब जलमा कीरा पर्‍यो र उनको रङ रुधिरजस्तो हुन गयो । यति हुँदा पनि उनलाई यो ज्ञान भएन कि यो भगवद्भक्तिपरायणा शबरीको तिरस्कारको फल हो । यता जल लिएर शबरी पुग्न पाएकी थिइनन् कि भगवान् श्रीराम "मेरी शबरी कहाँ छ ?" भनेर सोध्दै आउनुभएको देखियो । यद्यपि अन्यान्य ऋषिहरूलाई पनि यो निश्चय थियो कि भगवान् राम सर्वप्रथम उनीहरूकै आश्रममा पदार्पण गर्नुहुन्छ तर दीनवत्सल भगवान् श्रीरामचन्द्र पहिले उनीहरूको आश्रममा नगईकन नीच जातिकी शबरीको ठेगाना सोध्न लाग्नुभयो । तब अभिमानी ऋषिहरूलाई बडो आश्चर्य भयो । शबरीको कानमा पनि सरल ऋषिबालकहरूद्वारा यो कुरा पर्‍यो । श्रीरामको आफ्नो सच्चा भक्तप्रतिको अनुग्रह देखेर शबरीलाई जुन सुख भयो, त्यसको कल्पना कसले गर्न सक्दछ र ?

जय गुरुदेव !

## गुरुको हृदयसँगको मिलन

शरीरगत रूपको गुरुसँगको मिलन कुनै ठूलो कुरा होइन तर गुरुभक्तिको बलबाट गुरुको हृदयसँग मिल्नु धेरै ठूलो कुरा हो । जो सत्पात्र शिष्य हुन्छ उसलाई ज्ञात हुन्छ कि गुरुसँग हृदय मिलाउनाले मानिस कति निश्चिन्त हुन्छन् र कति उन्नत हुन्छन् । गुरुमुख व्यक्तिले नै समुन्नत हुन पाउँछ अन्यथा पुरानो संस्कारले मानिसलाई मनमुखतातिर लैजान्छ । आफ्नो मनमा जस्तो आयो त्यस्तो त कीरा-फट्यांग्राले पनि गर्दछन् तर मनबाट जसले ब्रह्मवेत्ताहरूसँग सम्बन्ध जोड्दछ त्यसैको जीवन सार्थक हुन्छ ।

# ज्येष्ठ महिनाको सूक्ष्म काल विवरण

आदरणीय पाठकवृन्द, विभिन्न महिनाका विभिन्न बारहरुमा पर्ने कालहरुको जानकारी तथा सूक्ष्म काल निर्णयका सम्बन्धमा विगतका अङ्कहरूमा प्रकाशित गरिएको थियो । यस अंकमा ज्येष्ठ महिनामा पर्ने विभिन्न चारवटा कालहरुको पनि ५-५ मिनेटको अन्तरालको फलहरुलाई प्रस्तुत गरिएको छ जसलाई हेर्न सँगै दिइएको तालिकालाई आधार बनाउनु होला ।

## ज्येष्ठ महिनाको महेन्द्र काल

१ देखि ५ मिनेटसम्म : यात्राको दृष्टिबाट यस समयको विशेष महत्त्व छ, यस समयका अधिष्ठाता 'गणेश' हुन् । अत: गणेशको स्मरण गरेर यात्रा प्रारम्भ गर्नुपर्दछ । दूबो चपाउनु शुभ मानिएको छ ।

६ देखि १० मिनेटसम्म : शुभ कार्य एवं व्यापारका लागि सर्वथा अनुकूल छ । यस कालका स्वामी 'शिव' हुन्, कार्य प्रारम्भ गर्नुपूर्व धनियाँ खानु अनुकूल रहन्छ ।

११ देखि १५ मिनेटसम्म : यात्रा, विजय कार्य, धन संग्रह, किनमेल र शुभ कार्यका लागि यो समय अनुकूल छ । यस समयका अधिष्ठाता 'ब्रह्मा' हुन्, पान खाएर कार्य प्रारम्भ गर्नु शुभ रहन्छ ।

१६ देखि २० मिनेटसम्म : व्यापार कार्यका लागि यो समयको छनौट विशेष शुभ रहन्छ, यस समयकी अधिष्ठात्री 'लक्ष्मी' हुन्, दूध प्रसाद खाएर कार्य प्रारम्भ गर्नु शुभ मानिएको छ ।

२१ देखि २५ मिनेटसम्म : यात्रा, जुवा, हानि-लाभ, सट्टा, भाग्य परीक्षा, मित्रता, लाभदायक कार्य आदिका लागि यो समय उचित छ । यस समयका स्वामी 'कार्तवीर्यार्जुन' हुन्, दही खानु शुभ मानिएको छ ।

२६ देखि ३० मिनेटसम्म : भाग्योदय, चुनाव, परीक्षा दिने, सफलतासम्बन्धी कार्य, स्थिर कार्य, भाग्योदयका लागि यस समयको छनौट गर्नुपर्दछ । यस समयका स्वामी 'विष्णु' हुन्, चामल खाएर कार्य प्रारम्भ गर्नु विशेष शुभ मानिएको छ ।

३१ देखि ३५ मिनेटसम्म : यात्रा, विवाह, व्यापार कार्य, मित्रता, उन्नति कार्य आदिका लागि यस समयको छनौट गर्नुपर्दछ । यस समयका अधिष्ठात्रा 'मरुत' हुन्, तिल खानु शुभ मानिएको छ ।

३६ देखि ४० मिनेटसम्म : उन्नति कार्य, विवाह, प्रणय, प्रेम प्रदर्शन, लाभ कार्य, खेल, यात्रा आदिका लागि यो समय शुभ छ । यस समयको अधिष्ठाता 'कामदेव' हुन्, मह खाएर कार्य प्रारम्भ गरियो भने विशेष शुभ रहन्छ ।

४१ देखि ४५ मिनेटसम्म : कुनै पनि व्यापारको उन्नति, जागिर, यात्रा आदिका लागि यस समयलाई छनौट गर्नु शुभ मानिएको छ । यस समयकी अधिष्ठात्री 'गौरी' हुन्, हरिद्रा खानु शुभ मानिएको छ ।

४६ देखि ५० मिनेटसम्म : यात्रा, शुभ कार्य, कुरा छिन्ने, विवाह, माङ्गलिक कार्य, व्यापारिक कार्य, जुवा आदिका लागि यो समय अनुकूल र शुभ छ । यस समयका देवता 'चन्द्र' हुन्, दही खानु शुभ मानिएको छ ।

५१ देखि ५५ मिनेटसम्म : व्यापार, सफलता, शिक्षा, खेल, प्रणय प्रसङ्ग, विवाह तथा यात्रा आदिका लागि यस समयलाई छनौट गर्नुपर्दछ । यस समयका देवता 'गौतम' हुन्, पान चपाएर कार्य प्रारम्भ गर्नु शुभ मानिएको छ ।

५६ देखि ६० मिनेटसम्म : कुनै पनि प्रकारको यात्रा एवं सफलताका लागि यो समय विशेष शुभ एवं अनुकूल छ । यस समयका देवता 'सूर्य' हुन्, सख्खर खाएर यात्रा अथवा कार्य प्रारम्भ गर्नुपर्दछ ।

## ज्येष्ठ महिनाको अमृत काल

१ देखि ५ मिनेटसम्म : यात्राका लागि यो समय शुभ छ । यसका देवता 'गणपति' हुन्, सख्खरको प्रयोग गरेर कार्य प्रारम्भ गर्नु शुभ मानिएको छ ।

६ देखि १० मिनेटसम्म : जुवा, व्यापार प्रारम्भ गर्न, कुनै पनि घर वा पसलको मुहूर्त आदिका लागि यो शुभ समय हो । यसका देवता 'विष्णु' हुन्, सख्खर खानु शुभ हुन्छ ।

११ देखि १५ मिनेटसम्म : कुनै पनि व्यापार कार्यका लागि यो समय शुभ छ । यसका देवता 'नृसिंह' हुन्, लड्डुको प्रयोग गरेर कार्य प्रारम्भ गर्नु शुभ हुन्छ ।

१६ देखि २० मिनेटसम्म : यात्रादिका लागि सर्वाधिक उपयुक्त समय छ । यस समयकी अधिष्ठात्री देवी 'सरस्वती' हुन्, मुगीको दाना चबाएर यात्रा प्रारम्भ गर्नु शुभ रहन्छ ।

२१ देखि २५ मिनेटसम्म : जुवा, व्यापार, व्यवसायका लागि यात्रा, यज्ञ, पूजन, अनुष्ठान आदिका लागि यो समय

# दोस्रो भाग अन्तर्गत (ज्येष्ठ र आषाढ महिनामा) पर्ने विभिन्न कालहरू

| आइतबार | | सोमबार | | मंगलबार | | बुधबार | | बिहीबार | | शुक्रबार | | शनिबार | |
|---|---|---|---|---|---|---|---|---|---|---|---|---|---|
| *समय* | *काल* | *समय* | *काल* | *समय* | *काल* | *समय* | *काल* | *समय* | *काल* | *समय* | *काल* | *समय* | *काल* |
| ६:००-८:२४दिन | अमृत | ६:००-७:३६दिन<br>*७:३०-९:००* | अमृत<br>*राहु* | ६:००-७:३६दिन | शून्य | ६:००-६:४८दिन | शून्य | ६:००-७:३६दिन | अमृत | ६:००-६:४८ | अमृत | ६:००-६:४८ | महेन्द्र |
| ८:२४-११:३६ | वक्र | ७:३६-९:१२<br>*७:३०-९:००* | वक्र<br>*राहु* | ७:३६-१०:०० | वक्र | ६:४८-८:२४ | महेन्द्र | ७:३६-१०:०० | वक्र | ६:४८-७:३६ | वक्र | ६:४८-९:१२<br>*९:००-१०:३०* | शून्य<br>*राहु* |
| ११:३६-२:४८ | अमृत | ९:१२-११:३६ | अमृत | १०:००-११:३६ | अमृत | ८:२४-१०:०० | अमृत | १०:००-११:३६ | अमृत | ७:३६-१०:०० | अमृत | ९:१२-१२:२४<br>*९:००-१०:३०* | अमृत<br>*राहु* |
| २:४८-३:३६ | शून्य | ११:३६-६:०० | वक्र | ११:३६-१:१२ | शून्य | १०:००-१२:२४<br>*१२:००-१:३०* | वक्र<br>*राहु* | ११:३६-१:१२ | शून्य | १०:००-१२:२४<br>*१०:३०-१२:००* | वक्र<br>*राहु* | १२:२४-४:२४ | वक्र |
| ३:३६-४:२४ | महेन्द्र | ६:००-८:२४रात्रि | वक्र | १:१२-३:३६<br>*३:००-४:३०* | वक्र<br>*राहु* | १२:२४-१:१२<br>*१२:००-१:३०* | शून्य<br>*राहु* | १:१२-३:३६<br>*१:३०-३:००* | वक्र<br>*राहु* | १२:२४-३:३६ | अमृत | ४:२४-६:०० | शून्य |
| ४:२४-६:००<br>*४:३०-६:००* | शून्य<br>*राहु* | ८:२४-११:३६ | अमृत | ३:३६-४:२४<br>*३:००-४:३०* | शून्य<br>*राहु* | १:१२-२:४८<br>*१२:००-१:३०* | वक्र<br>*राहु* | ३:३६-४:२४ | शून्य | ३:३६-४:२४ | शून्य | ६:००-६:४८ | शून्य |
| ६:००-६:४८रात्रि | शून्य | ११:३६-२:४८ | वक्र | ४:२४-६:००<br>*३:००-४:३०* | अमृत<br>*राहु* | २:४८-५:१२ | अमृत | ४:२४-६:०० | अमृत | ४:२४-६:०० | वक्र | ६:४८-८:२४ | वक्र |
| ६:४८-१०:०० | अमृत | २:४८-३:३६ | महेन्द्र | ६:००-६:४८रात्रि | शून्य | ५:१२-६:०० | शून्य | ६:००-९:१२रात्रि | वक्र | ६:००-७:३६रात्रि | वक्र | ८:२४-९:१२ | महेन्द्र |
| १०:००-१२:२४ | वक्र | ३:३६-६:०० | वक्र | ६:४८-१०:०० | अमृत | ६:००-७:३६रात्रि | वक्र | ९:१२-११:३६ | अमृत | ७:३६-९:१२ | अमृत | ९:१२-१०:४८ | अमृत |
| १२:२४-२:४८ | अमृत | | | १०:००-१२:२४ | वक्र | ७:३६-९:१२ | अमृत | ११:३६-२:०० | वक्र | ९:१२-१०:४८ | शून्य | १०:४८-२:४८ | शून्य |
| २:४८-४:२४ | वक्र | | | १२:२४-२:४८ | अमृत | ९:१२-१२:२४ | वक्र | २:००-४:२४ | अमृत | १०:४८-११:३६ | महेन्द्र | २:४८-३:३६ | अमृत |
| ४:२४-६:०० | महेन्द्र | | | २:४८-५:१२ | वक्र | १२:२४-२:४८ | अमृत | ४:२४-६:०० | वक्र | ११:३६-१:१२ | वक्र | ३:३६-४:२४ | वक्र |
| | | | | ५:१२-६:०० | महेन्द्र | २:४८-६:०० | शून्य | | | १:१२-२:४८ | अमृत | ४:२४-५:१२ | शून्य |
| | | | | | | | | | | २:४८-६:०० | शून्य | ५:१२-६:०० | अमृत |
| | | | | | | | | | | | | | |
| | | | | | | | | | | | | | |
| परमपूज्य सद्गुरुदेव डा.नारायणदत्त श्रीमाली (परमहंस स्वामी श्री निखिलेश्वरानन्द महाराज)द्वारा रचीत *'ज्योतिष और काल निर्णय'* पुस्तकमा आधारित । | | | | | | | | | | | | | |

**महेन्द्रकाल– सर्वश्रेष्ठ, अमृतकाल– श्रेष्ठ, वक्रकाल– सामान्य, शून्यकाल– निकृष्ट । शुभकालमा राहुकाल पनि मिसिएको छ भने त्यो समय पनि आफैं अशुभ हुन्छ ।**

सूक्ष्म काल विवेचना गर्नुपर्दा– सर्वप्रथम कुन बार हो र कति बजेको विवेचना गर्नु छ, त्यसअनुसार कुन काल परेको छ (महेन्द्रकाल, अमृतकाल, वक्रकाल वा शून्यकाल) त्यो तालिका हेरेर पत्ता लगाउनु पर्दछ । उदाहरणका लागि २०६६ ज्येष्ठ ३१ गते आइतबार बिहान ७:१३ बजेको सूक्ष्म विवेचना गरौं । आइतबार प्रात: ६:०० देखि ८:२४ बजेसम्म अमृतकालको समय छ । हाम्रो समय अमृतकालमा परेको छ । अब हाम्रो समय ७:१३ बाट हाम्रो काल शुरु भएको समय ६:०० घटाऔं । बाँकी रह्यो १:१३ अर्थात् १ घण्टा १३ मिनेट । अब घण्टा जति भए पनि त्यसलाई छोडिदिएर मिनेटमा मात्र विचार गर्नुहोस्- १३ मिनेट । त्यसपछि ज्येष्ठ महिनाको अमृतकालमा १३ मिनेट कहाँ पर्दछ हेर्नुहोस् । त्यहाँ लेखिएको छ– **११ देखि १५ मिनेटसम्म : कुनै पनि व्यापार कार्यका लागि यो समय शुभ छ । यसका देवता 'नृसिंह' हुन्, लड्डुको प्रयोग गरेर कार्य प्रारम्भ गर्नु शुभ हुन्छ ।** अब यहाँ लेखिएअनुसार गर्न सक्नुहुनेछ ।

शुभ छ । यस समयका देवता 'शिव' हुन्, चामलको प्रयोग गरेर कार्य प्रारम्भ गर्नु शुभ मानिएको छ ।

२६ देखि ३० मिनेटसम्म : यात्रा, महत्त्वपूर्ण र उन्नति कार्यहरूका लागि यस समयको छनौट राम्रो हुन्छ । यस समयका देवता 'रुद्र' हुन्, कार्य प्रारम्भ गर्नु अगाडि सख्खरको प्रयोग शुभ मानिएको छ ।

३१ देखि ३५ मिनेटसम्म : परीक्षा, चुनाव, अन्तर्वार्ता तथा यात्रा आदिका लागि समय शुभ छ । यस समयका अधिष्ठाता 'चन्द्र' हुन्, दही खाँदा शुभ हुन्छ ।

३६ देखि ४० मिनेटसम्म : जुवा, व्यापार, यात्रा आदिका लागि समय उपयुक्त छ । यस समयका देव 'शनि' हुन्, तिल खाएर कार्य प्रारम्भ गर्नु शुभ मानिएको छ ।

४१ देखि ४५ मिनेटसम्म : यात्रा, स्थायित्वसम्बन्धी कार्य, व्यापार प्रारम्भ मुहूर्त आदिका लागि यस समयको छनौट शुभ छ । यस समयकी देवी 'लक्ष्मी' हुन्, दूध प्रसाद खाएर गरेर कार्य प्रारम्भ गर्नु शुभ हुन्छ ।

४६ देखि ५० मिनेटसम्म : यात्रा, व्यापार, उन्नति कार्य एवं समस्त शुभ कार्यका लागि यो समय उपयुक्त छ । यसका प्रधान देव 'विष्णु' हुन्, मीठो पकवान खानु शुभ मानिएको छ ।

५१ देखि ५५ मिनेटसम्म : स्थायी कार्य, व्यापार, उन्नति तथा यात्रादिका लागि शुभ समय छ । यस समयकी अधिष्ठात्री 'गौरी' हुन्, दूबो चपाउनु शुभ रहन्छ ।

५६ देखि ६० मिनेटसम्म : विवाह, कुरा छिन्ने आदिका लागि प्रस्थान, अन्तर्वार्ता, मुद्दा मामिला आदिका लागि यो समय शुभ छ । यस समयका अधिष्ठाता 'हनुमान्' हुन्, सख्खर भक्षण गरेर कार्य प्रारम्भ गर्नु शुभ हुन्छ ।

## ज्येष्ठ महिनाको वक्र काल

१ देखि ५ मिनेटसम्म : यात्रा आदिका लागि विशेष अनुकूल छ । यसका प्रधान देव 'गणपति' हुन्, सख्खरको प्रयोग शुभ मानिएको छ ।

६ देखि १० मिनेटसम्म : प्रेम, वाद्य, जुवा आदिको लागि शुभ समय छ । यसका प्रधान देव 'पुष्पधन्वा' हुन्, मह खाँदा शुभ हुन्छ ।

११ देखि १५ मिनेटसम्म : जुवा, दौड, सिनेमा, व्यापार आदिका लागि यो उपयुक्त समय हो । यसका प्रधान देव 'शुक्राचार्य' हुन् । पकवान खाएर कार्य प्रारम्भ गर्नु शुभ हुन्छ ।

१६ देखि २० मिनेटसम्म : व्यापारादि कार्यहरूका लागि यो शुभ समय छ । यसका प्रधान देव 'गुरु' हुन्, बेसनको प्रयोग शुभ मानिएको छ ।

२१ देखि २५ मिनेटसम्म : व्यापार, व्यवसायका लागि सामान्य अनुकूल । यसका प्रधान देव 'चन्द्रमा' हुन्, दही खानु शुभ मानिएको छ ।

२६ देखि ३० मिनेटसम्म : यात्रादिका लागि यो समय अनुकूल छ । 'मरुत' यसका देव हुन् । सख्खर खाएर जाँदा राम्रो हुन्छ ।

३१ देखि ३५ मिनेटसम्म : जासूसी, भेद ज्ञात गर्ने, सामुन्ने भएको व्यक्तिलाई प्रभावित गर्ने आदिका लागि यो समय ठीक छ । यसका प्रधान देव 'वात' हुन्, चामल खाएर जानुहोस् ।

३६ देखि ४० मिनेटसम्म : मित्रता बढाउन, अधिकार प्राप्त गर्न, स्थानान्तरण आदिका लागि यो समय उपयुक्त छ । यसका प्रधान देव 'सूर्य' हुन्, जीराको प्रयोग गरियो भने विशेष अनुकूल रहन्छ ।

४१ देखि ४५ मिनेटसम्म : जुवा खेल्नको लागि उपयुक्त समय । यसका प्रधान देव 'वरुण' हुन्, दही खाएर यात्रा गर्नुहोस् ।

४६ देखि ५० मिनेटसम्म : प्रेम प्रदर्शन, प्रणय आदिका लागि यस समयको छनौट ठीक रहन्छ । यस समयका प्रधान देव 'कामदेव' हुन्, मह खाएर जानुहोस् ।

५१ देखि ५५ मिनेटसम्म : व्यापार आदिका लागि अपेक्षाकृत ठीक छ । प्रारम्भमा विलम्ब र पछि सिद्धि । यसका प्रधान देव 'गरुड' हुन्, हरिद्रा खाएर कार्य प्रारम्भ गरियो भने शुभ रहन्छ ।

५६ देखि ६० मिनेटसम्म : यात्राका लागि केही बाधकारक तर अन्त्यमा ठीक । यसका प्रधान देव 'अग्नि' हुन्, तोरी चपाएर कार्य गर्दा उत्तम रहन्छ ।

## ज्येष्ठ महिनाको शून्य काल

१ देखि ५ मिनेटसम्म : बाधाकारक समय, तर मुद्दा मामिला आदिका लागि शुभ । 'हनुमान्'लाई स्मरण गरेर, सख्खर, घिउ खाएर जाँदा भने अनुकूल ।

६ देखि १० मिनेटसम्म : जुवा खेल्नका लागि शुभ,

यस समयका देवता 'काल' हुन्, मह खाएर गइयो भने अनुकूल ।

११ देखि १५ मिनेटसम्म : कार्यको प्रारम्भमा तनावहरू, तर पछि स्थितिमा सुधार, प्रधान देव 'अग्नि'को स्मरण र तिल खानु शुभ ।

१६ देखि २० मिनेटसम्म : प्रत्येक कार्यका लागि व्यवधानपूर्ण, तर 'गौरी'लाई स्मरण गरेर र दही खाएर कार्य प्रारम्भ गर्दा केही अनुकूलता ।

२१ देखि २५ मिनेटसम्म : प्रत्येक कार्यका लागि अशुभ एवं तनावपूर्ण, तर पनि 'गणपति'लाई स्मरण गरेर र सख्खर खाएर कार्य प्रारम्भ गरिन्छ भने शुभ ।

२६ देखि ३० मिनेटसम्मः अनुकूल, शुभ, यात्रादिका लागि अनुकूल, प्रधान देवता 'ब्रह्मा' हुन्, दही भक्षण गर्नुहोस् ।

३१ देखि ३५ मिनेटसम्म : प्रत्येक कार्यका लागि अशुभ एवं बाधाकारक । 'हिडिम्बा'को ध्यान गर्नुहोस् । घिउको भक्षण शुभ ।

३६ देखि ४० मिनेटसम्म : प्रत्येक कार्यका लागि सामान्य अनुकूल । प्रधान देवता 'मकरध्वज'को स्मरण गर्नुहोस् तथा तोरी खानु शुभ ।

४१ देखि ४५ मिनेटसम्म : प्रत्येक कार्य अथवा यात्रादिका लागि प्रारम्भमा बाधाकारक तर पछि शुभ । तर पनि 'लक्ष्मी'लाई स्मरण गर्नुहोस् र चामल चपाउनु शुभ ।

४६ देखि ५० मिनेटसम्म : जुवा, मद्य, घोडा दौड, सौन्दर्य प्रसाधन सामग्री बिक्री, व्यापार आदिको लागि अनुकूल । प्रधान देवता 'विश्वकर्मा' हुनुहुन्छ, सख्खर र घिउ खानु शुभ ।

५१ देखि ५५ मिनेटसम्म : यात्रादिका लागि विपरीत समय, शुभ कार्यहरूमा वर्जित, 'चित्रगुप्त'लाई स्मरण गर्नुहोस् तथा फूल चपाएर कार्य प्रारम्भ गरियो भने केही अनुकूलता ।

५६ देखि ६० मिनेटसम्म : प्रणय प्रसङ्ग, मद्यपान, जुवा, घोडादौड आदिका लागि अनुकूल । 'शुक्राचार्य'को स्मरण गर्नुहोस् र फल खाएर जानुहोस् ।

जय गुरुदेव !



# ॐ मणि पद्मे हुं

'ॐ मणि पद्मे हुं'– यो षडक्षरी महामन्त्रको प्रमुख अधिष्ठाता देवता आर्यावलोकितेश्वरलाई मानिएको छ । यस महामन्त्रलाई गुणकारण्डव्यूह महायान सूत्रमा यसरी प्रशंसा गरिएको छ– जसले यस षडक्षरी मन्त्रको शुद्ध चित्तले सधैं जप गर्दछ उसलाई निश्चय नै सम्बोधि साधना गर्न सक्ने विद्यालाभ हुन्छ, कल्याणकारी श्रीसद्गुण, यश-कीर्ति प्राप्त हुन्छ । चिन्तनबाट अगोचर अनुपम महाभिज्ञ प्राप्त हुन्छ । यो मन्त्र सम्पूर्ण पारमिताको पनि स्वामी भएकोले सबै धारणी समाधि सुखलाभ हुन्छ । समस्त शास्त्र, विद्याको पनि गुरु एवं सम्पूर्ण धर्मको पनि अधिपति भएकोले असंख्य मार-विघ्नमा विजय प्राप्त गर्न सक्ने समर्थवान् भएको इत्यादि गुणले संयुक्त भएको भनिएको छ ।

'ॐ मणि पद्मे हुं'का चार पदहरूका आ-आफ्नै महत्त्वपूर्ण रहस्यमय अर्थ रहेका छन्–

ॐ– अत्यन्त विशुद्ध सर्वगुणसम्पन्न अ, उ, म त्रिअक्षर संयुक्त भई सिद्ध भएको ॐ अक्षरमा त्रिरत्नलोक पुण्यकीर्ति सम्पूर्ण त्रितत्त्व समावेश भएको संकेत हो ।

**मणि**– करुणामयको प्राणसमान अनन्तोपकारी सर्वदर्शी अन्तर्यामी जसलाई जस्तो आवश्यक भयो प्राप्त हुने, त्रिकाल बुद्धहरूले आश्रय दिइरहेको महामणि चिन्तामणि अनुत्तर बोधिरत्न भन्ने संज्ञा दिइएको छ ।

**पद्मे**– यसप्रकारको अनुत्तर महारत्नलाई आफ्नो श्रद्धा निश्चयरूपी चित्तको कमलको फूलमा सर्वत्र सर्वदाकाल सुशोभितरूपमा राख्न योग्य, उच्चकोटि सामादरणीय स्थान यही कमलको फूलमाथि स्वागतपूर्वक राखेका छन् ।

**हुं**– आर्यावलोकितेश्वरको चित्तस्वरूप जस्तोसुकै मन्त्र सिद्धि गर्नको कारणमा पनि प्राणहंसको रूपमा अधिष्ठान गरिएको छ । यसमा विभिन्न रहस्यपूर्ण अर्थ लुकेको छ ।

यस षडक्षरी मन्त्रको साधना गर्ने क्रममा एक-एक अक्षरलाई निम्न भावनाबाट अभ्यास गर्दै जानुपर्ने उल्लेख गरिएको छ–

'ॐकार' वीजाक्षरबाट वीणा लिएको सेतो करुणामय भई देवलोक उद्धार गर्न जानुभयो । त्यहाँ मृत्यु हुनुभन्दा

कविता

# गुरु प्रीत

ध्यान बस्छौं गुरु हामी हजूरकै नाउँमा
सिद्धाश्रम शक्ति केन्द्र आयो हाम्रै घर गाउँमा ।
योगीहरुका महायोगी यस लोकका पालनकर्ता
दीन-दु:खीको रक्षा गर्ने, हजूर नै सर्वदाता ॥
गुरुवर नै हामीहरुलाई सुमार्गमा लैजाने
अज्ञानलाई हटाएर ज्ञानको ज्योति छरिदिने ।
सबै प्राणीको हृदयमा बास बसीकन
आयौ गोरख शिवरुप धारण गरीकन ॥
जटाधारी निखिलेश्वर गुरु गोरखनाथ
हजूरकै आरती गाउँछौं पाँच बजे साँझ ।
जाति धर्म जे भए'नि सबै बराबर
हजूरकै कीर्ति गाउँछौं हामी सदाबार ॥
हामी साधक स्वच्छ मनले तिम्रै पदमा पर्छौं
सुख-दु:ख हरबखत तिम्रै नाउँ लिन्छौं ।
हाम्रा इच्छा पूरा गरिदेऊ हे ! प्राणनाथ
तिम्रै शरण पर्छौं हामी देऊ हामीलाई साथ ॥

–अञ्जना लामिछाने
डायमण्ड उच्च मा.वि.
लेखनाथ-७, डाँडाको नाक ।

सात दिनअघि ठूलो दु:ख हटाउने उपदेश दिएर समताज्ञान प्राप्त गराई उद्धार गर्नुभयो ।

'मकार' वीजाक्षरबाट खड्ग ढाल लिइरहनुभएको हरियो करुणामय भई दैत्यलोक उद्धार गर्न जानुभयो । त्यहाँ परस्पर प्रहारको दु:ख हटाउने उपदेश दिनु भई कृत्यानुष्ठान ज्ञान प्राप्त गराईकन मुक्त गर्नुभयो ।

'णिकार' वीजाक्षरबाट शिलाङ्कुश पिण्डपात्र लिइरहनुभएको पहेंलो करुणामय भई मृत्युलोक उद्धार गर्न जानुभयो । त्यहाँ प्रिय-अप्रियको कारणले चिन्ता, अलमलमा भुलेर फुर्सद नपाई भएको दु:खबाट मुक्त हुने उपदेश दिएर सुविशुद्ध ज्ञान प्राप्त गराई महामोक्ष पठाउनुभयो ।

'पकार' वीजाक्षरबाट प्रज्ञा पुस्तक लिइरहनुभएको निलो करुणामय भई तिर्यक् योनि उद्धार गर्न जानुभयो । त्यहाँ अज्ञानले छोपेको कारण कुरा गर्न नसक्ने दु:खबाट मुक्त हुने उपदेश दिएर धर्मधातु ज्ञान प्राप्त गराई उद्धार गर्नुभयो ।

'द्मेकार' वीजाक्षरबाट चिन्तामणि रत्न लिइरहनुभएको रातो करुणामय भई प्रेतलोक उद्धार गर्न जानुभयो । त्यहाँ भोक, प्यासको ठूलो दु:ख हटाउने उपदेश दिएर प्रत्यवेक्षणा ज्ञान प्राप्त गराई उद्धार गर्नुभयो ।

'हुंकार' वीजाक्षरबाट कलश र अग्नि ज्वाला लिइरहनुभएको धूवाँ वर्णको करुणामय भई नरकलोक उद्धार गर्नुभयो । त्यहाँ असहनीय तातो-चिसो भयंकर दु:ख शान्त हुने सद्धर्मोपदेश दिएर आदर्श ज्ञान प्राप्त गराई उद्धार गर्नुभयो ।

यसरी सर्वगुणसम्पन्न षडक्षरी महामन्त्र नियमानुसार श्रद्धा, निश्चयपूर्वक चित्त परिशुद्ध गरी महाकारुणिक आर्यावलोकितेश्वरको ध्यान गरी बोधिचित्त उत्पन्न गरी एक सयपटक जप गरे काय, वाक्, चित्तको पाप नाश हुन्छ । हजारपटक जप गर्दा कर्तव्य-भ्रष्टको पाप कर्म परिशान्त हुन्छ । एक लाख जप गरेमा सुमेरु पर्वतसमान पाप भए पनि परिशुद्ध हुन्छ । दश लाख जप गर्ने भक्तजनलाई कहिले पनि नारकीय दु:ख भोग्नु पर्दैन । यदि दस करोड जप गरियो भने नि:सन्देह नै सम्बोधि ज्ञान प्राप्त भई अविवर्तिक बोधिसत्व हुन्छ भनी वर्णन गरिएको छ । –पद्म नारायण

# ध्रुवकृतभगवत्स्तुतिः

ध्रुव उवाच

योऽन्तः प्रविश्य मम वाचमिमां प्रसुप्तां
संजीवयत्यखिलशक्तिधरः स्वधाम्ना ।
अन्उांश्च हस्तचरणश्रवणत्वगादीन्
प्राणान्नमो भगवते पुरुषाय तुभ्यम् ।।१।।
एकस्त्वमेव भगवन्निदमात्मशक्त्या
मायाख्ययोरुगुणया महदाद्यशेषम् ।
सृष्टवानुविश्य पुरुषस्तदसद्गुणेषु
नानेव दारुषु विभावसुवद् विभासि ।।२।।
त्वद्दत्तया वयुनयेदमचष्ट विश्वं
सुप्तप्रबुद्ध इव नाथ भगत्प्रपन्नः ।
तस्यापवर्ग्यशरणं तव पादमूलं
विस्मर्यते कृतविदा कथमार्तबन्धो ।।३।।
नूनं विमुष्टमतयस्तव मायया ते
ये त्वांभवाप्ययविमोक्षणमन्यहेतोः ।
अर्चन्ति कल्पकतरुं कुणपोपभोग्य-
भिच्छन्ति यत्स्पर्शजं निरयेऽपि नृणाम् ।।४।।
या निर्वृतिस्तनुभृतां तव पादपद्म-
ध्यानाद् भवज्जनकथाश्रवणेन वा स्यात् ।
सा ब्रह्मणि स्वमहिमन्यपि नाथ मा भूत
किं त्वन्तकासिलुलितात् पततां वमानात् ।।५।
भक्तिं मुहुः प्रवहतां त्वयि मे प्रसङ्गो
भूयादनन्त महताममलाशयानाम् ।
येनाञ्जसोल्बणभुरुव्यसनं भवाब्धिं
नेष्ये भवद्गुणकथामृतपानमत्तः ।।६।।
ते न स्मरन्त्यतितरां प्रियमीश मर्त्य
ये चान्वदः सुतसुहृद्गृहवित्तदागाः ।
ये त्वब्जनाभ भवदीयपदारविन्द-
सौगन्ध्यलुब्धहृदयेषु कृतप्रसङ्गाः ।।७।।
तिर्यङ्नगद्विजसरीसृपदेवदैत्य-
मर्त्यादिभिः परिचितं सदसद्विशेषम् ।
रुपं स्थविष्ठमज ते महदाद्यनेकं
नातः परं परम वेद्मि न यत्र वादः ।।८।।
कल्पान्त एतदखिलं जठरेण गृह्वन्
शेते पुमान् स्वदृगनन्तसखस्तदङ्के ।
यन्नाभिसिन्धुरुहकाञ्चनलोकपद्म-
गर्भे द्युमान भगवते प्रणतोऽस्मि तस्मै ।।९।।
त्वं नित्यमुक्तपरिशुद्धविबुद्ध आत्मा
कूटस्थ आदिपुरुषे भगवांस्त्र्यधीशः ।
यद बुद्ध्यवस्थितिमखण्डितया स्वदृष्ट्या
द्रस्टा स्थितावधिमखो व्यतिरिक्त आस्से ।।१०।।
यस्मिन् विरुद्धगतयो ह्यनिशं पतन्ति
विद्यादयो विविधशक्तय आनुपूर्व्यात् ।
तद् ब्रह्म विश्वभवमेकमनन्तमाद्य-
मानन्दमात्रमविकारमहं प्रपद्ये ।।११।।
सस्याऽऽशिषो हि भगवंस्तव पादपद्म-
माशीस्तथानुभजतः पुरुषार्थमूर्तेः
अप्येवमर्य भगवान् परिपाति दीनान्
वाश्रेव वत्सकमनुग्रहकातरोऽस्मान् ।।१२।।
इति श्रीमद्भागवत महापुराणे चतुर्थस्कन्धे नवमेऽध्याये
ध्रुवकृता भगवत्स्तुतिः सम्पूर्ण ।

धार्मिक मान्यताअनुसार विभिन्न देवदेवीहरू, पितृदेव, गन्धर्व आदिलाई मनपर्ने फलफूल, मिष्ठान्न आदि चढाउने परम्पराका बारेमा हामीले सुन्दै र देख्दै आएका छौँ । यसबाट के कुरा पुष्टि हुन्छ भने हामीले मानी आएका देवीदेवताहरूलगायत अन्यलाई खुशी पार्ने कुनै विशेष सामग्री हुन्छन् जसबाट उहाँहरूको कृपा, आशीर्वाद प्राप्त गर्न सकिन्छ । यसैप्रकार हाम्रा परम आराध्य सद्गुरुदेव श्री श्री महायोगी गुरु गोरखनाथलाई खुशी तुल्याउने एउटा सहज माध्यम हो 'रोट'को अर्पण । रोट एक किसिमको रोटी हो । यस प्रकारको रोटी श्री श्री महायोगी गुरु गोरखनाथलाई अत्यन्तै मनपर्ने प्रिय वस्तु हो ।

**रोट पकाउने विधि**

अत्यन्तै स्वादिष्ट र पुष्टिकर यो रोट बनाउन विशेष विधि अपनाइन्छ । चामलको पीठोका अतिरिक्त गहुँको पीठोको पनि रोट बनाउन सकिन्छ । गहुँ, जौ अथवा चामलको पीठोमा धेरै प्रकारका सुकेका फलादि, मसलाहरू मिसाएर राम्रोसँग विधि पुऱ्याएर मुछिसकेपछि यसलाई पकाइन्छ । नरिवल, दाख, अलैँची, ल्वाङ, सुकुमेल, छोहरा, मरीच, खुदो, मह, घ्यू, चिनी, काजुजस्ता पुष्टिकारक र बलवर्धक पदार्थहरूको मिश्रणहरू मिसाएर तयार पारिने रोट विशेषत: दुई प्रकारले पकाउन सकिन्छ । भुङ्ग्रोमा पकाइएको रोटलाई 'भुङ्ग्रे रोट' भनिन्छ र तावामा तारिएको रोटलाई 'ताई रोट' भनिन्छ । गुरु गोरखनाथलाई चढाउने रोटहरूमा यिनै दुई प्रकारका रोटहरू बढी प्रचलनमा रहेको पाइन्छ ।

पीठो मुछेर पातमा राखेर धुनिमा पकाइने रोटलाई भुङ्ग्रे रोट भनिन्छ । यस प्रकारको रोट अत्यन्तै बाक्लो हुन्छ । साथै यो ठूलोमा नाङ्लो जत्रो पनि पकाउन सकिन्छ । धुनिमा पकाइने हुनाले यसको स्वाद अत्यन्तै मीठो हुने गर्छ । तावामा पकाउने रोटका लागि घ्यूको आवश्यकता पर्दछ । शुद्ध घ्यूमा विभिन्न फल र मसला मिसाइएका पीठोलाई विशेष आकृति दिएर पकाइन्छ । जुनसुकै रोट पकाउँदा पनि पृथ्वीको आकार दिने, ॐकार स्वरूप दिएर आराध्यदेव गुरु गोरखनाथको श्रीचरणकमलमा अर्पण गर्ने प्रावधान रहँदै आएको छ । तावामा पकाइने रोट होस् या भुङ्ग्रे रोट जुनसुकै भए पनि बीचमा नाभिष्ट राख्ने प्रचलन रहेको छ । यस नाभिष्टलाई शिवलिङ्ग पनि भनिन्छ । त्यो नाभिष्ट विशेष मन्त्रोच्चारण गरेर मात्र बनाइन्छ । रोटको केन्द्र अथवा बीचतिर छेदन गर्दा पनि विशेष मन्त्रको जप गरेर मात्र गरिन्छ र रोट पकाउँदा र बनाउँदा विभिन्न संस्कारबाट जानुपर्ने हुन्छ ।

प्रसंग फो

## रोटको महत्व

नेपाल अधिराज्यलगायत भारतमा पनि गुरु गोरखनाथको मठ-मन्दिरमा विशेष तिथि र बारहरूमा उहाँको चरणकमलमा रोट अर्पण गर्ने प्रचलन रहिआएको छ । गुरु गोरखनाथको प्रिय वस्तुको रूपमा रहेको रोट उहाँको चरणकमलमा अर्पण गर्दा उहाँ खुशी हुनुभएर राष्ट्रमा देखिएका विप्लव, महामारी, प्राकृतिक प्रकोपजस्ता समस्याहरू हटेर जान्छन् । गोर्खाली सेनाले लडाँइको समयमा गुरु गोरखनाथलाई रोट चढाएर युद्ध आफ्नो पक्षमा पारेको र युद्धको बेला केवल रोट मात्र सेवन गरेर रणक्षेत्रमा होमिने बहादुर सैनिकहरूको सन्दर्भ इतिहासमा पाउन सकिन्छ । नेपालको केही क्षेत्रमा बालकको अन्नप्रासनका बेलामा रोट पकाएर खुवाउने चलन रहिआएको छ । सबैका आराध्य गुरु गोरखनाथको आशीर्वाद र कृपा पाउन आज-भोलि घर-घरबाट पनि उहाँको श्रीचरणकमलमा रोट अर्पण गर्ने गरेको पाइन्छ । पहिले-पहिले राजा-महाराजाहरूले मात्र रोट बनाएर गुरु गोरखनाथलाई चढाउने गरेको पाइन्थ्यो भने परमपूज्य सद्‌गुरुदेव श्री श्री महायोगी गुरु गोरखनाथ एवं परमहंस स्वामी श्री निखिलेश्वरानन्द महाराजको असीम कृपा एवं आशीर्वादले सिद्धाश्रम शक्ति केन्द्रले पनि गोरखास्थित गोरख गुफामा यसै वैशाखमा सवा लाख रोट अर्पणको शृङ्खलालाई छैटौँपटक निरन्तरता दिने सौभाग्य पाएको छ ।

रोट ‘महाप्रसाद’ हो । सद्‌गुरुदेवको चरणकमलमा अर्पित रोट खान पाउनु मानव जीवनको उच्च सौभाग्य हो । जसले रोट प्रसाद ग्रहण गर्दछ त्यो आत्मा नै धन्य हुन्छ । त्यो आत्माका युग युगान्तरका पाप कर्महरू, दोषहरू नाश हुन्छन् र एउटा जीवले मुक्ति प्राप्त गर्नका लागि सजग मार्ग निर्माण हुन्छ । तसर्थ, महाप्रसाद रोट ग्रहण गर्नाले हुने शारीरिक, मानसिक र आध्यात्मिक फाइदाहरू वर्णनातीत छन् ।

सद्‌गुरुदेव श्री श्री महायोगी गुरु गोरखनाथको चरणकमलमा रोट अर्पण गर्नु महाभाग्य हो । जब मानवको जन्म-जन्मको पुण्यकर्मस्वरूप उसमा सद्‌बुद्धिको उदय हुन्छ तब मात्र ऊ यस्तो महान् कार्यमा सरीक बन्न सक्दछ । भनिन्छ एउटा रोट अर्पण गर्दा एउटा पृथ्वी दान गरे बराबरको पुण्य मिल्दछ ।

यस्तो पुण्य आर्जन गर्ने र यस्तो महाप्रसाद ग्रहण गर्न पाउने दुर्लभ क्षण हामी सबैले गत वैशाख २६ गतेदेखि आगामी ज्येष्ठ ५ गतेसम्म ११ दिनका लागि प्राप्त गरिरहेका छौँ ‘रोट महोत्सव २०६६’ मनाउँदै । जय गुरुदेव !

# रे रोटको

*परमपूज्य सद्‌गुरुदेव श्री श्री महायोगी गुरु गोरखनाथका लीलाहरूको वर्णन गरी तयार पारिएको श्री गोरख महापुराणलाई शृङ्खलाबद्धरूपमा प्रकाशित गर्दै लगिएको छ । यसबाट परमपूज्य सद्‌गुरुदेवको बारेमा जान्न, बुझ्न खोज्ने सम्पूर्ण पाठकहरू लाभान्वित हुनुहुनेछ भन्नेमा हामी विश्वस्त छौँ । यस महापुराणलाई संकलन एवं अनुवाद गरी प्रस्तुत गरिएको हो । यससम्बन्धी सम्पूर्ण कुराहरूको जिम्मेवारी संकलक एवं अनुवादक (विष्णु खनाल,गोर्खा) स्वयंको नै हुनेछ ।*

# श्री गोरख महापुराण

## स्वर्ग नर्कको मीमांसा

औघडनाथ भन्नुहुन्छ– गुरुदेव ! स्वर्ग, नर्क, पाप-पुण्य र मोक्ष के हुन् ? कर्म कहाँ रहन्छ ?

गोरख गुरु भन्नुहुन्छ– बाबु औघडनाथ ! तिम्रो प्रश्न अज्ञानताले भरिएको छ अर्थात् पाप, पुण्य, स्वर्ग, नर्क आदि के हुन् भन्ने तिमीले माया भ्रमलाई अज्ञानबाट कल्पित सम्झेर यस्तो प्रश्न गरिरहेका छौ जुन वास्तवमा छँदै छैन, स्वप्नवत् विवेचनको योग्य छ । यी सबै अज्ञानस्वरूप हुन्, तापनि ती कुन कर्मबाट उत्पन्न हुन्छन्, यी सबै जान्नाले अज्ञानको पत्तो लाग्दछ । तब त्यसबाट बच्न सकिन्छ । अज्ञानको नाश नभईकन मोक्षस्वरूप बुझाइमा आउँदैन । बुझाइमा नआईकन त्यसको प्राप्ति हुँदैन । क्रिया गर्नाले जुन ज्ञान हुन्छ, त्यही कर्म कहलाउँछ । कर्म पनि आन्तरिक र बाह्य दुई प्रकारका हुन्छन् । दुवै कर्मले सूक्ष्म भाव उत्पन्न गर्दछन् र त्यस भावलाई अदृष्ट भनिन्छ । अदृष्ट पनि शुभ र अशुभ दुई प्रकारका हुन्छन् । शुभ भाव पुण्यस्वरूप र अशुभ भाव पापस्वरूप हो । पुण्य सुखरूप स्वर्ग र पाप दुःखरूप नर्क हो । जब अदृष्ट पक्व हुन्छ तब त्यसको फल सुख-दुःख हुन्छ । यस अज्ञानबाट मुक्त भएर आफ्नो आद्य स्वरूपमा टिक्न जानुको नाम नै मोक्ष हो । पाप-पुण्य कुनै स्थूल वस्तु होइन । स्थूलको सम्बन्धबाट ज्ञान अज्ञानको कारण राग द्वेषसहित उठेको सूक्ष्मभाव नै पाप-पुण्य हो । यदि यो भाव तीव्र भएमा चाँडो पक्व हुन्छ र मंद भएमा ढिलो पक्व हुन्छ । पक्व भएर जब त्यो फल दिनको लागि तत्पर हुन्छ तब त्यसैलाई प्रारब्ध भनिन्छ जुन फल नदिईकन रहन सक्दैन । पाप कर्म कुन र पुण्य कर्म कुन हो ? यसको यथार्थ निर्णय सहज हुँदैन । सामान्य रूपबाट भने कुन पाप कर्म हो र कुन पुण्य कर्म हो जान्न सकिन्छ ।

यदि पाप-पुण्य मात्र स्थूल कार्य हुन्थ्यो भने यस्तो निर्णय हुन्थ्यो तर त्यो त सूक्ष्म भावस्वरूप हो । यसकारण यथार्थ निर्णय देश कालको स्थिति, योग्यता, सामर्थ्यसहित लोकसम्मति र शास्त्र वाक्य अन्तःकरणको

शुद्ध भावअनुसार हुन्छ । शास्त्रमा अमुक कर्म पाप र अमुक कर्म पुण्य भनेको छ । कहिलेकाहीँ शास्त्र वाक्यको विरुद्ध पनि फलको प्राप्ति हुन्छ । देश कालविपरीत शास्त्र वाक्य ग्रहण गर्नु ठूलो भूल हो । यसकारण आफ्नो कर्तव्य, अकर्तव्यको निर्णय गर्नमा दीर्घदृष्टिबाट काम लिनुपर्छ । विद्वान्हरूको दृष्टिमा जुन सज्जन सम्झिइन्छ र व्यवहार देशकाल र शास्त्रअनुसार गरिन्छ तिनै मानिसहरूको सम्मति नै लोक सम्मति र शुद्ध अन्तःकरण हो । यस प्रकार तीनै कुराहरूको ठीक-ठीक मिलान गर्नाले सही निर्णय सम्भव छ । जस्तो शास्त्रले आज्ञा दिएको छ– माता-पिता र गुरुको सेवा गर्नू । उहाँहरूको आज्ञाको उल्लङ्घन गर्नाले भयङ्कर पाप लाग्दछ । तर ध्रुव, प्रह्लाद र राजा बली क्रमैले यी तीनैको आज्ञा उल्लङ्घन गरे तर पनि लोक तथा शास्त्रले ती मानिसहरूलाई दूषित पापी भन्दैनन् । यस्तो आज्ञाको भङ्ग गर्नाले यी मानिसलाई दोषको स्थानमा विशेष फलको प्राप्ति भयो, जस्तो माताको आज्ञा भङ्ग गरेर ध्रुवले तपस्या गरे, पिताको आज्ञा भङ्ग गरेर प्रह्लादले भक्ति गरे र राजा बलीले गुरु आज्ञाको उल्लङ्घन गरेर दान दिने प्रतिज्ञा पूरा गरे । सबैभन्दा धेरै पुण्य गर्नाले इन्द्रलोक (स्वर्ग) को सुख प्राप्त हुन्छ । इन्द्रलाई धेरै सुख प्राप्त हुन्छ किनकि उनी स्वर्गलोकका राजा हुन् । यति सुख भएर पनि उनी दुःखबाट मुक्त भने छैनन् । धेरै सुख भएर पनि सुखको अन्त्य हुन्छ । यसैकारण मुमुक्षुहरूलाई (मोक्षको इच्छा राख्ने) इन्द्रलोकको इच्छा हुँदैन । इन्द्रको सुख मायावी सुख हो ।

आत्म सुखको अगाडि मायावी सुख तुच्छ र असत्य छ । जब कुनै महान् तपस्वीले तप गर्दछ, तब इन्द्रलाई आफ्नो पदबाट भ्रष्ट हुने चिन्ताले सताउन लाग्दछ । एक समय त्वष्टा पुत्र त्रिशिरालाई मार्नाले इन्द्रलाई ठूलो दोष लाग्यो, तब अर्को पुत्र वृत्रासुरसँग इन्द्रको युद्ध भयो र भयङ्कर लडाइँ भयो । देवताहरूको बलले असुरहरूको अगाडि काम दिएन । वृत्रासुरले इन्द्रलाई निले र इन्द्र वृत्रासुरको पेटरूपी जेलखानामा बन्द भएर भयङ्कर कष्ट पाउन लागे । केही समयपछि वृत्रासुरलाई हाई आयो । त्यस मौकामा इन्द्र निस्केर भागे । तब इन्द्र र देवताहरू मिलेर विष्णु भगवान्को शरणमा गए र उनीहरूको इच्छाअनुसार वृत्रासुरसँग सन्धी गरे । इन्द्रलाई परवशतावश सन्धी गर्नुपऱ्यो, तर उनको हृदयमा कपट थियो यसकारण समय आएपछि सन्धी भङ्ग गर्ने पाप गरेर अदृष्ट सूक्ष्म बीज इन्द्रमा जमिरह्यो । एकदिन वृत्रासुर

सन्ध्या समय समुद्र किनारामा टहलिरहेका थिए । इन्द्रले योग्य अवसर देखेर वज्रमाथि समुद्रको फिँज चढाएर विष्णु भगवान्‌को स्मरण गरेर विष्णु शक्तिबाट त्यसको शिर काटेर लडाए । यस प्रकारको कपट गर्नाले पापको अदृष्ट जुन सूक्ष्म थियो त्यो दृढ भयो र पक्व भएर फल दिनलाई प्रवृत्त भयो, तब इन्द्र डराएर भित्रभित्रै जल्न लागे । कुनै उपायबाट पनि शान्ति नपाएर उनी त्यहाँबाट भागेर वनको जलाशयमा गएर लुके । त्यहाँ वरुणको प्रेरणाबाट उनले अश्वमेध यज्ञ गरे । इन्द्र भागेपछि इन्द्रासन खाली थियो, राजाबिना प्रजा शान्तियुक्त नदेखेर सबै देवता र ऋषिहरूले मिलेर राजा नहुषसँग इन्द्र बन्नको लागि प्रार्थना गरे । राजा नहुष शुभ आचरणवाला थिए, उनको पुण्य पक्व भएर फल दिन योग्य भएको थियो । उनले देवताहरू र ऋषिहरूसँग भने– म इन्द्र बन्न योग्य छैन । कारण म निर्बल छु । यो सुनेर देवता र ऋषिहरूले भने– हामी सबै आफ्नो तेजबल पनि तपाईंलाई दिन्छौं । त्यसबाट तपाईं बलिष्ठ हुनु हुनेछ । यसप्रकार सम्झाएर राजा नहुषलाई देवताहरूको राजा इन्द्र बनाइदिए । नहुष स्वर्गमा राज्य गर्न लागे । सबै देवता उनको दरबारमा हाजिरी दिन लागे । तर शची (इन्द्राणी) उनको नजिक गइनन्, नहुषले राजसभामा भने– हे देवता हो ! म तपाईंहरूको राजा हुँ, तब म शची (इन्द्राणी) को पनि मालिक भएँ यसकारण उसलाई पनि मेरो अधीन हुनुपर्छ । यति सुनेर देवताहरू चुप लागेर बसे, कसैले कुनै उत्तर दिएनन् । जब शचीलाई यस कुराको खबर भयो तब उनले देवगुरु वृहस्पतिलाई विनयपूर्वक भनिन्– महाराज नहुष मलाई आफ्नी पत्नी बनाउन चाहन्छन् र तपाईंले तँ पतिव्रता रहनेछस्, कहिल्यै विधवा हुने छैनस् भनेर मलाई पतिव्रता रहने वरदान दिनुभएको छ । तपाईं आफ्नो वरदान सत्य गर्नुहोस् र नहुषबाट मेरो रक्षा गर्नुहोस् । वृहस्पतिले आश्वासन दिएर भने– देवी ! नडराउ ! म तिम्रो रक्षा गर्नेछु र इन्द्रलाई पनि चाँडै नै बोलाउने छु । राजा नहुषलाई पनि यो समाचार पुग्यो कि वृहस्पतिले शचीलाई आफ्नो नजिक आउनबाट रोकेका छन् । यद्यपि नहुष धर्मात्मा थियो तापनि ऐश्वर्य प्राप्त हुनाले अभिमानको दोषबाट ऊ दूषित हुन गएको थियो । प्रथम उसले शचीसँग संयोगको इच्छा गर्‍यो, तब दुष्ट सूक्ष्मभाव उत्पन्न भयो । फेरि उसको इच्छामा विघ्न हाल्नाको कारण वृहस्पतिको तिरस्कार स्थूलतामा प्राप्त भएर दुष्टात्मा प्राप्त गर्न लाग्यो । नहुष वृहस्पतिसँग रिसाएको देखेर देवता र ऋषिहरूले उसलाई रोक्दै भने– हे राजन ! तपाईंको क्रोध अनुचित छ । अर्काकी पत्नीलाई कामवासनाले हेर्नु अनुचित हो । शची पतिव्रता नारी हुन् । जसले पतिव्रता नारीलाई भ्रष्ट गर्न चाहेको छ उसले पापिष्ट भएर आफ्नो बदनाम गरेको छ । तपाईं धर्मात्मा भएर यस्तो नसोच्नुहोस् । यी वाक्यबाट नहुष क्रोधित भए र उनले भने– के गौतम ऋषिकी पत्नी अहिल्या इन्द्रका लागि पराई थिइनन् ? गौतम जिउँदो छँदै कपट गरेर इन्द्रले उनलाई भ्रष्ट गरेनन् ? तपाईंहरूले उसलाई किन रोक्नु भएन ? तपाईंहरू व्यर्थ मेरो अवज्ञा गरिरहनु भएको छ । म राजा हुँ, मेरो सहायता गर्नु तपाईंहरूको कर्तव्य हो । यस्तो सुनेर सबै देवता चुप भए । तीमध्ये एकजनाले भने– हामी शची कहाँ जान्छौं र उनलाई सम्झाउने प्रयत्न गर्छौं । यसो भनेर देवताहरू वृहस्पतिसँग गएर भने– हे गुरु ! हामीले नहुषलाई अनेक प्रकारबाट सम्झायौं तर उनी आफ्नो धुनको अगाडि कसैले भनेको पनि सुन्दैनन् । सबैको कल्याणको लागि तपाईं शचीलाई नै सम्झाउनुहोस् कि उनले नहुषलाई आफ्नो पति मानेर उनको साथमा विवाह गरून् या तपाईं कुनै दोस्रो उपाय गर्नुहोस् । राजा र प्रजाको मन मिल्नाले नै शान्ति भइरहन्छ । वृहस्पतिले देवताहरूलाई सम्झाएर शान्त गरे । उनले शची कहाँ गएर भने– हे शची ! तँ नहुष कहाँ गएर केही समय माग, त्यस समयसम्म कुनै न कुनै विघ्न उपस्थित हुन्छ । वृहस्पति गएपछि नहुष त्यहाँ आइपुगे । तब शचीले विनयपूर्वक उनीसँग भनिन्– हे राजन ! म एक पति छँदाछँदै दोस्रो पति वरण गर्न सक्दिन, यसकारण म पहिला इन्द्रलाई खोज्छु, यदि उहाँ जिउँदो पाइन भने तपाईंकी पत्नी बनुँला । तपाईं मलाई कम्तीमा एघार दिनको समय दिनुहोस् । यदि यति दिनमा पनि पत्ता लागेन भने तपाईंलाई म आफ्नो पति स्वीकार गरूँला । यो कुरा नहुषले माने । उनले सोचे कि इन्द्र ब्रह्म हत्यारा भएको छ, अब उनी इन्द्र रहन सक्तैनन् । यदि उनी जीवित भए पनि म उसलाई मार्नेछु । शचीले संदेहविनाशिनी उपश्रुति देवीको आराधना गरिन् तब देवीले प्रकट भएर शचीसँग भनिन् कि तिमी हाम्रो साथ हिँड । यसो भनेर देवीले शचीलाई हिमालय पर्वतको पारी उत्तरकोणमा लगिन् जहाँ सरोवरको बीच द्वीपमा एउटा तलाउ थियो जो सय योजन लम्बाईको थियो र त्यसमा कमल फुलिरहेको थियो । धागो समान सूक्ष्मरूप धारण गरेर इन्द्र त्यहाँ रहन्थे ।

देवीले शचीलाई इन्द्र देखाइदिइन् र इन्द्रसँग भनिन्– तपाईं त्यहाँ गएर नहुषलाई स्वर्गबाट निकालिदिनुहोस् ।

इन्द्रले भने– ऊ ऋषिहरूको आहुति पाएर धेरै बलियो भएको छ । यो समय लडाईंको होइन । म युद्ध गरेर उसलाई जित्न सक्दिन। शचीले मागेको समय जब समाप्त हुन जान्छ त उसले नहुषलाई भन्नुपर्छ कि सबै प्रकारको वाहन मैले देखें । तपाईं इन्द्र हुनुभएको छ यसकारण कुनै आश्चर्ययुक्त वाहनमा चढेर मकहाँ आउनुहोस् तब म तपाईंलाई आफ्नो पति बनाउँला । वाहनका पशु दिव्यरूपधारी हृष्टपुष्ट ब्रह्मज्ञानी हुनुपर्छ अथवा तपाईं ऋषिमुनिहरूको काँधमा राखेको पाल्कीमा बसेर मेरो नजिक आउनुहोस् । यति सुनेर शची र देवी फर्केर आए र इन्द्रले भने अनुसार शचीले नहुषसँग उपरोक्त कुरा गरिन् । नहुषले शचीको प्रार्थना स्वीकार गरे र ऋषिहरूलाई पाल्कीमा जोतेर त्यसमा बसेर इन्द्राणीको नजीक गए । पालकीमा जोतेका ऋषिमुनिहरूमा अगस्त्य मुनि पनि थिए । परमहंस ऋषिहरूले मिहिनेतको कार्य कहिल्यै गरेका थिएनन् । उनीहरू पाल्की बोक्ने जस्तो काम कसरी गर्न सक्थे ! फेरि पनि ती शान्त भावले पाल्की उठाएर सुस्त-सुस्त हिंड्न लागे तर राजा नहुषमा शचीसँग भेट्ने आतुरता प्रबल थियो । यसकारण उसले ऋषिहरूलाई शीघ्र हिंड्नका लागि भन्यो । ऋषिहरू आफ्नो हिसाबले छिटै हिंडेका थिए तर नहुषको आतुरताको कारण ती धेरै ढिलो भइरहेका थिए । उसलाई ठूलो रीस उठ्यो र उसले अगस्त्य मुनिलाई लात मार्‍यो । अगस्त्य मुनि शान्त थिए तर नहुषको क्रोध उनमा प्रवेश गर्‍यो र प्रतिध्वनि रूप क्रोध उम्लेर आयो । अगस्त्य मुनिले श्राप दिए– तँ सर्प भएर धरतीमा झर, तँलाई दश हजार वर्षपछि स्वर्ग प्राप्त हुनेछ । नहुषको पाप संस्कार जुन स्थूलतामा प्राप्त भएको थियो त्यो मुनिलाई लात मार्नाले दोषबाट पूर्ण भएर पाक्यो र फल दिनमा प्रवृत्त भयो । यसकारण राजा नहुष सर्प भएर धरतीमा झर्‍यो । इन्द्र सामु जब यो खबर पुग्यो भयो तब उनी जलबाट निस्केर आफ्नो पदमा आएर आरुढ भए ।

इन्द्रले त्रिशिरालाई मारेर जुन पाप ग्रहण गरे त्यसको पुण्य प्रबल भएको कारण पाप सूक्ष्म भावमा रह्यो । जब दोस्रोपटक वृत्रासुरसँग युद्धको लागि उनी गए तब पापको दोषको कारण हारे । फेरि छलद्वारा सन्धी गर्नाको कारण उनको पापमा वृद्धि भयो । फेरि विश्वासको कारण अधिक वृद्धि हुनाले सबै पाप पाकेर फल दिनलाई तत्पर भए र इन्द्रलाई पापको जलन हटाउनको लागि जलमा प्रवेश गर्नुपर्‍यो । राजा नहुष शुभ कर्मवाला थिए । जब उनको पुण्य फल दिनको लागि तत्पर भयो तब निर्बल भए पनि ऋषिमुनिहरूको शक्तिबाट इन्द्र भए, यहाँसम्म उनको शुभ कर्म थियो । ऐश्वर्य प्राप्त हुनाले पाप संस्कार बढ्न थाल्यो । प्रथम परपत्नीतर्फ पापदृष्टि फेरि ऋषिमुनिलाई तुच्छ सम्झनु, दोस्रो गुरु वृहस्पतिको तिरस्कार, तेस्रो ऋषिमुनिहरूलाई पाल्कीमा जोत्नु शास्त्र निषिद्ध थियो, चौथो अगस्त्य मुनिलाई लात मार्नु, पापको घडा पूर्ण भरिएको कारण नहुषलाई सर्प हुनु पर्‍यो । क्रमश:

जय गुरुदेव !

*यस स्तम्भअन्तर्गत परमपूज्य सद्गुरुदेव डा. नारायण दत्त श्रीमालीज्यूले आफ्नो अवतरणकालमा विभिन्न समयमा विभिन्न विषयमा दिनुभएको प्रवचनलाई धारावाहिकरूपमा प्रस्तुत गर्ने क्रममा 'अकथ कहानी प्रित की' विषयको प्रवचनलाई अनुवाद गरी प्रकाशन गरिएको छ ।*

# विरहभित्रको प्रेम

*प्रेम में कुछ नहीं तदवीर,*
*दुख ही दुख जिन्दगी में मिलते हैं ।*

—प्रेममा त केही पनि पाइन्न, प्रेममा त दुःख नै दुःख प्राप्त हुन्छ, वेदना नै वेदना प्राप्त हुन्छ, विरह नै विरह प्राप्त हुन्छ । तर यस विरहमा पनि एउटा रस हुन्छ, मस्ती हुन्छ । यस दुःखमा पनि एउटा आनन्द हुन्छ किनकि सधैँ इच्छा, आकांक्षा बनिरहन्छ कि म आफ्नो जीवनको अन्तिम क्षणमा नै भए पनि आफ्नो प्रियसँग मिलूँ ।

*पिव बिना तो जीवणा जग में भारी जान,*
*पिया मिले तो जीवणा नहीं तर छूटे प्राण ।*

प्रेमीबिना त यस संसारमा जिउन साह्रै कठिन भएको छ । सास फेर्न पनि बडो गाह्रो भएको छ– *पिव बिना तो जीवणा जग में भारी जान, पिया मिले तो जीवणा नहीं तर छूटे प्राण...* । प्रियसँग मिल्ने कुनै आशा रहन्छ भने बल्ल जीवित रहनुको पनि सार हुन्छ । यदि आशा नै छैन भने बरु प्राण नै छुटोस्, यस देहबाट मुक्त हुन पाऊँ । यदि मिल्न सक्दिन भने कम्तीमा उसको नजिक त जान सकूँ... उसको नजिक बस्न सकूँ... उसलाई एकटक हेर्न सकूँ, जीवनको आनन्द लिन सकूँ । यदि प्रिय छैन भने जीवित रहने कल्पना गर्न सकिन्न ।

*घरी पलक में विदसिये ज्यों मछली बिन नीर,*
*छिन-छिन दुखिया दग्धिये विरह विथा तन पीर ।*

—कति दुःख छ !

—कति वेदना छ !

—प्रत्येक क्षण यो दुःखिया दग्ध भइरहेकी छे । हर क्षण बलिरहेको अगुल्टोले शरीर डामिरहेको जस्तो लागिरहेको छ उसलाई । विरहले मलाई बारम्बार डसिरहेको छ । हरेक पटक मलाई लाग्दछ यस विरहले मलाई जलाएर खरानी पार्नेछ ।

*छिन-छिन दुखिया दग्धिये विरह विथा तन पीर...* यस शरीरमा एउटा पीडा छ, र त्यस पीडाको आनन्द मैले लिइरहेकी छु... *घरी पलक में विदसिये ज्यों मछली बिन नीर...* एक क्षणमा नै यो सबै माटोमा मिल्नेछ । जसरी पानीबिना माछा रहन सक्दैन, त्यसैगरी म पनि आफ्नो प्रियतमबिना जीवनको कल्पना गर्न सक्दिन । कस्तो विडम्बना, म जसलाई चाहन्छु, उसलाई पाइरहेकी छैन... र यदि पाउन सकिन भने त मेरो जीवनको कुनै अर्थ, कुनै

उद्देश्य पनि बाँकी रहँदैन ।

*लाख होशियार बनाकर खालिक, इक मखमूर बना देता है,*
*अख्तियारात-ए जहाँ सौंप के सब कुछ, कितना मजबूर बना देता है ।*
*दौलत-ए-दर्दे दो आलम देकर, दिल-ए-रन्जूर बना देता है,*
*फिर इनायत यह कि दर्द-ए-दिल को नासूर बना देता है ।*
*बालों पर करके सुगर्देशोला,*
*हमानतन नूर बना देता है,*
*दो बसर आंख को तेरा जलवा*
*मतला-ए-नूर बना देता है ।*

मलाई केही पनि चाहिन्न, तैपनि यस पीडाले हृदय छियाछिया बनाइदियो । जसरी हृदय छियाछिया बन्न पुग्दा त्यसको अन्तहीन पीडा सहनु पर्दछ, त्यसै प्रकार मैले यस *दर्द-ए-दिल*को पीडालाई सहनु परिरहेको छ किनकि जबसम्म उसलाई देख्दिन तबसम्म यी आँखा त दुखिरहन्छन् । अब यी आँखालाई म के गरूँ । म आफ्नो शरीरलाई सम्झाउन सक्छु, म आफ्नो हृदयलाई सम्झाउन सक्छु, तर यी आँखालाई...

*दरस बिन दूखण लागे नैन,*
*जब से तुम बिछुडे प्रभु मोरे, कबहू न पायो चैन ।*
*सबद सुनत मोरी छतिया कांपे मीठे मीठे बैन,*
*बिरह व्यथा कासूं कहूं सजनी, बह गई करवत ऐन ।*
*बल न पड़त पल हरिमग जोवत भई छमासी, रैन*
*मीरा के प्रभु कब रे मिलोगे दुख मेटन सुख देन ।*

मीरा भनिरहेकी छिन्– तिमीलाई कहिले भेट्न पाउँला, किनकि मेरो सारा शरीर जल्न लागिरहेको छ... आफैमा व्याकुल र विरहले ओतप्रोत भएको छ । यस्तो लाग्छ मुटुमा करौंती चलिरहेको छ... र फेरि म यो विरहको व्यथा कसलाई भनूँ, के भनूँ र कसले बुझ्ला यसलाई ? अब जीवनमा कुनै रस रहेन, कुनै आनन्द बाँकी रहेन... *बिरहिन पर पिंजर छिना, पिव को कौन सुनावे रे...* उसलाई कसले भनिदेला मेरो शरीर सुकेर काँडा भएको छ । कसले भनिदेला यो शरीर केवल हाडहरूको ढाँचा बन्न पुगेको छ ।

*विरहिन पर पिंजर छिना, पिव को कौन सुनावे रे,*
*बिन पिव अगन जले निस बासर कौन उन्हें समझावे रे ।*

ऊ त आफ्नो ठाउँमा बसेको छ, उसलाई त थाहै छैन कि कोही उसको पर्खाइमा बसेकी छ । त्यस प्रभुलाई पत्तै छैन कि कोही भक्तले उसको प्रतीक्षामा आफ्नो शरीर जलाइरहेको छ । यदि कसैलाई यस कुराको ज्ञान छैन भने फेरि म कसलाई भनूँ, कसले बुझ्ला ? यो त यस्तो पो हुन्छ–

*कागा सब तन खाइयो चुन-चुन खाइयो मांस,*
*दो नैना मत खाइयो मोहें पिव मिलन की आस ।*

यदि म मरेँ र मेरो लाश कतै फ्याँकियो भने हे काग, तिमीले मेरो मासुलाई चुनी-चुनी खाऊ । तिमीसँग प्रार्थना छ... *दो नैना मत खाइयो...* ममाथि यति दया गर, सारा शरीरलाई खाए पनि मेरा दुई आँखालाई भने नखाइदेऊ, मेरा यी दुई आँखालाई भने जस्ताको तस्तै राखिदेऊ किनकि मलाई आशा छ म मरेपछि ऊ अवश्यै आउँछ... मैले जीवित छँदै उसलाई देख्न नसके पनि मृत्युपछि भए पनि ऊ आउँदा मैले देख्न पाइँन भने मलाई कति वेदना हुन्छ! यसलाई तिमीले बुझ्न सक्दैनौ ।

एउटी विरहीणीको कस्तो दशा हुन्छ ? कुन स्तरसम्म गएर उसले सोच्दछे, र मनलाई सम्झाउने धैर्य उसमा कति छ ? उसले भनी– मरेमा पनि कुनै गुनासो छैन ।

*मैं खुद को मिटा दूं इस बात का कोई इल्म नहीं,*
*इल्म तो यह है कि मेरे मिटने के बाद तो तुम आओगी ।*

मलाई थाहा छ, म जीवित छँदा तिमी आउने छैनौ, मलाई व्याकुल बनाउनेछौ । यो त तिम्रो बानी नै हो । तर यस कुराको मलाई पूरा विश्वास छ कि म मरेपछि भने तिमी पक्कै आउनेछौ... र त्यसबेला मैले तिमीलाई हेर्न पाउनेछु, त्यतिबेला मेरो छट्पटी हट्नेछ । क्रमश:

जय गुरुदेव !

---

**मलाई दुःख लाग्दछ तिमीहरुले मेरो प्रवचन सुन्दछौ मात्र । मेरो प्रवचन त सुन्ने भन्दा गुन्ने हो, हृदयमा उतार्ने हो, आफ्नो रगतमा एकाकार गर्ने हो, आफ्नो व्यक्तित्वमा एकरस गर्ने हो ।**

**– परमपूज्य सद्‌गुरुदेव डा. नारायणदत्त श्रीमालीज्यू**

# आरतीको महत्त्व

मानव जातिलाई उच्चतातर्फ अग्रसर रहन प्रेरित गर्ने विशाल गगनचुम्बी हिमालय पर्वतहरूको काखमा अवस्थित पावनभूमि नेपाल, जो वास्तवमा तपस्वी, साधक, सिद्ध महात्मा एवं सज्जनहरूको अति प्रिय क्रिडास्थलि वा भनौं तपोस्थलि हो । यस भूमिले परम ज्ञानी भगवान् बुद्ध, नेपालीहरूका गर्वका प्रतिमूर्ति श्री श्री महायोगी शिव गोरक्षनाथ, ब्रह्माण्डनायक परमपूज्य परमहंस स्वामी श्री निखिलेश्वरानन्द महाराज (डा. नारायण दत्त श्रीमालीज्यू) को पावन चरणस्पर्श गर्ने समेत सौभाग्य प्राप्त गरेको छ । यो हामी सबैको लागि गर्वको विषय हो । यस्ता अजर, अमर, परम आराध्य दिव्यात्माहरूप्रति एवं आफ्ना इष्टदेवहरूप्रति श्रद्धा, समर्पण दर्शाउने विविध माध्यमहरूमध्ये आरती गान पनि एउटा हो । दैवी कृपा, गुरु कृपा प्राप्त गरी आफ्नो मानव चोलालाई धन्य-धन्य बनाउनको लागि अपनाइने अन्य विविध माध्यमहरू भए पनि आरतीलाई एउटा अत्यन्तै सशक्त माध्यमको रूपमा लिन सकिन्छ ।

**आरती जस्तो पावन शब्दभित्र लुकेर रहेको गूढतम ज्ञानसागरलाई अध्यात्म विज्ञानको सहयोगबाट स्पर्श गर्दै शनैशनै यसभित्र डुब्न सक्नुमा नै मानव जीवनको सार्थकता लुकेको हुन्छ ।**

आरती गर्ने चलनको बारेमा खोजी पस्ने हो भने सत्य, त्रेता, द्वापर तीनै युगमा र अझै भन्नु पर्दा यी तीनै युगको जन्मभन्दा पनि अघिको समयमा पनि आरती गर्ने प्रचलन विद्यमान थियो । आफ्नो इष्टदेव, कुलदेव, गुरुदेवलाई रिझाएर अभिष्ट फल प्राप्त गर्ने अत्यन्त सरल, सहज माध्यम आरतीले आफ्नो मनमा गुम्सिएर रहेका दुःख, दर्द, शोक, पीडा, अपूर्ण इच्छा, आकांक्षालगायत कुनै पनि अभिलाषाहरू सम्बन्धित देवीदेवताहरू वा गुरुसत्तासम्म पुऱ्याउनको लागि अपनाइने विधिवत् क्रिया नै समग्रमा भन्नुपर्दा आरती हो ।

आरतीको वास्तविक स्वरूप र शक्तिको पहुँच कति र कहाँसम्म छ भन्ने तथ्यबाट हामी पूर्णतः विमुख रहनाले यसबाट प्राप्त हुने यथोचित लाभ प्राप्त गर्नबाट पनि हामी वञ्चित नै छौं । आरतीजस्तो पावन शब्दभित्र लुकेर रहेको गूढतम ज्ञानसागरलाई अध्यात्म विज्ञानको सहयोगबाट स्पर्श गर्दै शनैशनै यसभित्र डुब्न सक्नुमा नै मानव जीवनको सार्थकता लुकेको हुन्छ । आरती केवल निर्जीव शब्दहरूको संयोजन मात्र नभएर हृदयमा आफ्नो इष्टदेवलाई स्थापना गर्ने एक महायन्त्र हो, शिष्यको अन्तरहृदयबाट प्रस्फुटित पुकार हो गुरुप्रतिको । वास्तवमा आर्त शब्दबाट नै आरती शब्दको जन्म भएको हो । आरती एक शिष्यको लागि सम्पूर्ण आराधना हो । दुई चारवटा शब्दहरूलाई रटिरहनु मात्र आरती हुन सक्दैन । शिष्यको अन्तरहृदयबाट निस्किने करुणापूर्ण आर्तनाद जसले गुरुलाई शिष्यको माझमा उपस्थित हुन बाध्य गराउँछ, त्यस्तो अत्युत्तम महामन्त्र नै वास्तवमा आरती हो । जय गुरुदेव !

# आफ्नो हात आफै हेरौं

यस स्तम्भअन्तर्गत हस्तरेखा विज्ञानअनुसार मानिसको हातमा रहेका विभिन्न पर्वतहरूको बारेमा हामीले चर्चा गर्दै आइरहेका छौं। प्रत्येक पर्वतको आफ्नै महत्त्व र स्वभाव रहेको हुन्छ जसअनुसार यस अंकमा चन्द्र पर्वतको बारेमा चर्चा गरिएको छ। यो लेख पढेर तपाईं पनि आफ्नो हातमा रहेको हर्षल र नेपच्यून पर्वतको स्थितिबारे अध्ययन गरी आफ्नो स्वभावबारे जान्न सक्नुहुन्छ। यस स्तम्भको बारेमा कुनै प्रतिक्रिया भए हामीलाई पठाउन सक्नुहुनेछ।

## हर्षल

वास्तवमा हेर्ने हो भने यो अरू ग्रहहरूको अपेक्षा धेरै बलवान् एवं समर्थ हुन्छ। हातमा यसको क्षेत्र हृदय तथा मस्तिष्क रेखाको बीचमा हुन्छ। सही रूपमा यसको क्षेत्र कान्छी औंलाको तल, बुध पर्वतभन्दा केही तल अनुभव गर्न सकिन्छ।

यस ग्रहको प्रभाव हृदय तथा मस्तिष्कमाथि विशेषरूपमा पर्दछ। जुन व्यक्तिको हातमा यो पर्वत बुधको तल तथा हृदय एवं मस्तिष्क रेखाको बीचमा हुन्छ, त्यो व्यक्ति विश्वप्रसिद्ध वैज्ञानिक र गणितज्ञ बन्छ। अणु, परमाणु, टेलिभिजन आदि जटिल यन्त्रहरूको निर्माण तथा रचनामा यस्तो व्यक्ति पूर्णत: सफल हुन्छ। यदि यस पर्वतको उभार कम छ भने यस्तो व्यक्ति मेशिनरीसम्बन्धी कार्यहरूमा रुचि लिने तथा यस्तै स्थानहरूमा नोकरी गरेर सन्तुष्ट हुन्छ।

यदि यस पर्वतमा त्रिकोण वा चतुर्भुजको चिह्न छ भने त्यो व्यक्तिले आश्चर्यजनकरूपमा प्रगति गर्दछ तथा आफ्ना कार्यहरूबाट विश्वस्तरीय सम्मान प्राप्त गर्दछ। समाजमा उसको सम्मान हुन्छ र उसलाई आफ्नो जीवनमा अपेक्षा गरे भन्दा बढी सफलता प्राप्त हुन्छ। यदि हर्षल पर्वतबाट कुनै रेखा साहिँली औंलातिर जान्छ भने त्यो व्यक्ति जीवनमा विश्वप्रसिद्ध हुन्छ। यदि हर्षल पर्वतको झुकाव बुध पर्वततिर विशेष रूपमा छ भने यस्तो व्यक्तिले आफ्नो प्रतिभाको दुरूपयोग गर्दछ र एक प्रकारले त्यस्तो व्यक्ति अन्तर्राष्ट्रिय ठग वा लुटेरा हुन जान्छ। यस्तो व्यक्ति हृदय रोगबाट पनि बारम्बार पीडित रहन्छ। यदि हर्षल पर्वत नेपच्यूनतिर झुकेको छ भने यस्तो व्यक्तिलाई पूर्णत भोगी सम्झनुपर्दछ। यस्तो व्यक्ति एक पत्नीबाट सन्तुष्ट नभएर भट्किरहन्छ। उसको गृहस्थ जीवन एक प्रकारले बर्बाद हुन्छ, उसलाई पत्नी तथा छोराप्रति पनि कुनै प्रकारको मोह रहँदैन। जीवनमा आवश्यकताभन्दा बढी व्यसनमा लिप्त रहेर यस्तो व्यक्तिले आफ्नो स्वास्थ्य तथा सौन्दर्यलाई बिगार्दछ।

## नेपच्यून

यो ग्रह पृथ्वीभन्दा अत्यन्तै टाढा रहेको हुनाले पृथ्वीबासीमा यसको प्रभाव अत्यन्तै कम पर्दछ तर पनि यसको प्रभाव मानव जीवनमा जति पर्दछ, त्यो स्थायी हुन्छ र आफैमा आश्चर्यजनक परिणाम देखाउने हुन्छ।

हातमा यस ग्रहको क्षेत्र मस्तिष्क रेखाभन्दा तल तथा चन्द्र क्षेत्रभन्दा माथि हुन्छ। यदि यो क्षेत्र अथवा यो पर्वत विशेष रूपमा उठेको छ भने त्यो व्यक्ति श्रेष्ठ संगीतज्ञ, कवि अथवा लेखक हुन्छ। यदि यस पर्वतमा रेखा देखिन्छ भने र यदि त्यो रेखा भाग्य रेखासँग मिल्दछ भने त्यो व्यक्ति जीवनमा अत्यधिक महत्त्वपूर्ण पदमा पुग्दछ।

यदि यस पर्वतको झुकाव चन्द्र क्षेत्रतिर विशेष रूपमा छ भने यस्तो व्यक्तिको जीवन दु:खमय हुन्छ तथा उसको गृहस्थ जीवन बर्बाद हुन्छ । यस्तो व्यक्ति सनकी, 'शंकालु तथा क्रूर प्रकृतिको मानिन्छ। यदि नेपच्यून पर्वत विकसित भएर हर्षलसँग मिल्दछ भने त्यस व्यक्तिले जीवनमा निश्चय नै धनको लालचमा कसैको हत्या गर्दछ भन्ने बुझ्नु पर्दछ। यस्तो व्यक्ति आफ्नो कार्यहरूप्रति लापर्वाही हुन्छ तथा कार्य भइसकेपछि पछुताइरहन्छ ।

यदि यस पर्वतमा क्रसको चिन्ह छ भने उसको पूरा जीवन गरीबी तथा निर्धनतामा बित्दछ । उसले आफ्नो जीवन आवश्यकताहरूलाई पनि राम्रोसँग पूरा गर्न सक्दैन । क्रमश: जय गुरुदेव !





## हार्दिक धन्यवाद

परमपूज्य सद्‌गुरुदेवहरुको परमकृपा एवं आशीर्वादस्वरुप स्वास्थ्य तथा आयुर्वेदको क्षेत्रबाट समाज कल्याणका कार्यहरु गर्न युनिभर्सल एकीकृत स्वास्थ्य अनुसन्धान तथा विकास फाउन्डेशन(UIHRDF)नामक सामाजिक संस्थाको स्थापना भएको कुरा यहाँहरुलाई सहर्ष जानकारी गराउँछौं । उक्त संस्था स्थापना गर्ने क्रममा प्रत्यक्ष र परोक्षरुपमा सहयोग गर्नुहुने सम्पूर्ण आत्मन्‌हरुलाई हृदयदेखि नै धन्यवाद व्यक्त गर्दछौं ।

साथै रोट महोत्सव २०६६ को पावन अवसरमा परमआराध्य सद्‌गुरुदेव श्री श्री महायोगी गुरु गोरखनाथको परम कृपाले सारा जगत्‌मा सुख, शान्ति, समृद्धि र आरोग्यता छाओस् भनी प्रार्थना गर्दछौं ।

**युनिभर्सल एकीकृत स्वास्थ्य अनुसन्धान तथा विकास फाउन्डेशन (UIHRDF) परिवार**, केन्द्रीय कार्यालय बल्खु चोक, काठमाडौं ।

फोन : ९८४१९१५०१०, ९७४११३५१९६

# गुरुवाणी

**तिमी मेरो शिष्य हौ र कैयौं-कैयौं शताब्दीदेखि नै तिमी मेरो शिष्य हौ । यी दिग्पाल, यी देवता, यो धरती र यो आकाश यस तथ्यको साक्षी छ। तिमी मलाई छोड्न पनि त सक्दैनौ किनकि कैयौं-कैयौं जन्मको सम्बन्ध छ, तिमी म बिना रहनै सक्तैनौ किनकि कैयौं-कैयौं शताब्दीहरुको यो बन्धन हो । म तिमीसँग विछोडिएँ भने तिम्रो आँखाबाट अश्रुकण झर्दछ । तिमी मेरो आलोचना गर्न सक्दछौ, मबाट टाढा रहने प्रयत्न गर्न सक्दछौ तर मलाई एक क्षण पनि बिर्सन सक्ने छैनौ । म बिर्सन लायक व्यक्तित्व पनि होइन किनकि म तिम्रो हृदयको गहिराइमा बसेको छु । यसकारण तिमी आफूले आफूलाई चिन, तिम्रो र मेरो सम्बन्धलाई बुझ, मबाट 'उऋण' हुने यही एक मात्र उपाय छ ।**

## २०६६ ज्येष्ठ महिनामा पर्ने चाडपर्व

| मिति | चाडपर्व |
|---|---|
| **ज्येष्ठ ५ गतेसम्म** | रोट महोत्सव |
| ज्येष्ठ ३ गते | गोरखकाली पूजा |
| **ज्येष्ठ ४ गते** | **श्री शिव गोरक्ष हवन** |
| **ज्येष्ठ ५ गते** | **तान्त्रोक्त वटुक भैरव हवन** |
| **ज्येष्ठ ६ गते** | **तान्त्रोक्त महालक्ष्मी हवन,तान्त्रोक्त विन्ध्यवासिनी हवन**, अपरा एकादशी |
| **ज्येष्ठ ७ गते** | **दिव्य गुरु महोत्सव,तान्त्रोक्त बगलामुखी हवन, तान्त्रोक्त महर्षि वेदव्यास हवन** |
| ज्येष्ठ ८ गते | प्रदोष व्रत |
| ज्येष्ठ १५ गते | कुमार षष्ठी |
| ज्येष्ठ १७ गते | गोरखकाली पूजा |
| ज्येष्ठ २० गते | निर्जला एकादशी |
| ज्येष्ठ २२ गत | प्रदोष व्रत |

**प्रत्येक बृहस्पतिबार बिहान १०:00 बजे-गुरू पूजन**

**प्रत्येक दिन साँझ ५:00 बजे-आरती**

# पिनासको आयुर्वेदिक उपचार

अत्यधिक वातावरण प्रदूषणका कारण, ऋतु र समयानुसारका खानपानमा असन्तुलनका कारण आजकाल मानिसहरू पिनास रोगबाट पीडित भएका पाइन्छन् । कतिपयमा यो रोग केही समयका लागि ठीक भए जस्तो लागे पनि फेरि पछि बल्झिने, बारम्बार सताइरहने, धेरै समयसम्म उपचार गर्दा पनि ठीक नहुने हुन्छ । आयुर्वेद चिकित्सामा पिनास रोगको सरल उपचार पाइन्छ जसको अनुसरण गरिएमा यस्ता रोगहरूबाट पहिले नै बच्न सकिन्छ भने लागेका रोगहरूलाई पनि निको पार्न सकिन्छ ।

### के हो त पिनास ?

पटक-पटक रुघा, खोकी लागिरहने, नाक बन्द हुने, टाउको भारी भएर दुख्ने एवं नाकबाट पहेँलो सिँगानजस्तो दुर्गन्धित स्राव स्रावित हुने अवस्था नै पिनास हो । अनुहारका हड्डीहरूस्थित हावा भरिएका खोपिल्टाहरूमा हुने संक्रमणको कारण यस्तो अवस्था आउँछ ।

### पिनास कसरी लाग्छ त ?

१. बढी मात्रामा रुघा, खोकी लागिरहनाले । रुघा, खोकीको समयमा दही, माछा तथा अन्य चिसो पदार्थहरूको अत्यधिक सेवन गर्नाले ।

२. परिश्रम नगर्नाले, बढी मात्रामा दिउँसो सुत्नाले एवं धूवाँ धूलोको सम्पर्कमा बढी मात्रामा बसिरहनाले आदि ।

### पिनासमा निम्न लक्षण र चिहनहरु देखिन्छन् :

१. टाउको भारी भएर दुख्छ (प्राय: आधा टाउको दुख्छ) र अल्छी लाग्छ । संक्रमित खोपिल्टामाथि दबाब दिँदा दुख्छ ।

२. नाक बन्द हुन्छ, नाके बोली आउँछ ।

३. नाकबाट पीपमिश्रित दुर्गन्धित पहेँलो सिँगानजस्तो पदार्थ स्रावित हुन्छ ।

४. बारम्बार खोकी लागिरहन्छ ।

५. गन्ध ज्ञान विकार हुन्छ ।

### परीक्षण :

बिरामीले बताएको लक्षणको आधारमा नै करिब करिब पिनास रोग चिन्न सकिन्छ तर पनि यकिन गर्न निम्न जाँचहरू गर्न सकिन्छ ।

१. एक्स रे पि.एन.एस. (Water's view)

२. राइनोसकोपी

### कसरी उपचार गर्ने ?

**औषध चिकित्सा** : पिनासको उपचारका लागि आयुर्वेदमा वर्णित औषधिहरू :

**चूर्ण** : पिप्पली चूर्ण, कटफलादि चूर्ण, मरिच चूर्ण, व्योषादि चूर्ण, त्रिकटु चूर्ण आदि ।

**वटी** : लवङ्गादि वटी, व्योषादि वटी, खदिरादि वटी आदि ।

**नस्यार्थ तेल** : षड्बिन्दु तेल, अणु तेल, पाठादि तेल आदि ।

**अवलेह** : चित्रक हरितकी, च्यवनप्राश आदि ।

**निर्मित रसौषधिहरु** : महालक्ष्मीविलास रस, लक्ष्मीविलास रस, मृत्युञ्जय रस, रामवाण रस, नारदीय लक्ष्मीविलास रस, त्रिभुवनकीर्ति रस, सञ्जीवनी वटी, गोदन्ती भस्म, पञ्चामृत रस आदि ।

उपरोक्त औषधिहरूमध्ये रोगको अवस्था हेरी दुई वा दुईभन्दा बढी योगहरू विज्ञ डाक्टरको सल्लाह लिएर प्रयोग गर्न सकिन्छ ।

**पथ्य:** लघु एवं सुपाच्य अन्नहरू जस्तै : मुंग, मुसुरोको दाल, तातो पानी, हलुका व्यायाम आदि ।

**अपथ्य** : गरिष्ठ भोजन, चिसो पानी एवं फ्रिजमा राखिएका खाद्य पदार्थहरू, चिसो पानीले नुहाउनु, धापिएर आएर एक्कासी चिसो पानी खानु, दिउँसो सुत्नु, वेग धारण, ताजा मद्यपान आदि वर्जित छन् ।

**– डा. राजेश्वर अर्याल**
(लेखक आयुर्वेद क्याम्पस तथा आयुर्वेद शिक्षण अस्पताल कीर्तिपुरमा कार्यरत हुनुहुन्छ)

# सद्गुरुदेवहरूको दर्शन यसरी पनि !

गत वर्षको फागुन महिनामा भएको का.स.स. 'क'को तालिमको कुरा हो । पहिलो दिनको तालिममा मलाई आँखा लाग्यो । मलाई आफू कहाँ पुगेछु जस्तो पो भयो । त्यसबेला म त पुरानो बानेश्वरमा रहेको आश्रममा पो गुरु कार्य गर्दै रहेकी थिएँ । संन्यासी स्वरूपमा आउनुभएर गुरुदेवले मलाई 'तिमीले किन मेरो स्मरण गरेको ? भन, म त तिमीसँग नै छु' भन्नुभयो । त्यतिबेला म त ध्यानमा नै थिएँ । मैले गुरुदेवलाई भनें– 'मैले हजूरलाई स्मरण गर्नाको कारण हजूरलाई नै थाहा छ, मैले भन्नु पर्दैन होला ।'

गत वर्षकै भाद्र महिनामा महालक्ष्मी हवनको दिन थियो । म दैनिकरूपमा ३ बजे पूजा, पाठ, जप, आरती सिध्याउँछु । अघिल्लो दिन मलाई अलिअलि टेन्सन थियो । टेन्सनका कुरालाई मनमा लिएर मैले ध्यान गरें । पूजा कोठामा मेरो तनावलाई राखें । गुरुदेवहरूलाई सम्झेर आँखा चिम्लना साथ पूजा कोठामा नै गुरुदेवहरू आउनुभयो । उहाँहरूले 'तँ मात्रै सबैजनाको चिन्ता लिएर बस्ने, तेरो चिन्ता गर्ने को छ ?' भनेर भन्नुभयो । 'अबदेखि तैंले कसैको पनि पीर नगर, तेरो त म छु' भनी टाउकोमा हात राखी आशीर्वाद दिनुभयो । उहाँले 'आज महालक्ष्मीको हवन छ' भनेर पनि स्मरण गराउनुभयो ।

२०६५ साल माघ महिनाको २१ तारीख थियो । कार्यक्रममा परमपूज्य सद्गुरुदेवहरूको दिव्य पादुका पूजनको क्रममा जप गर्ने बेलामा मैले माला नलिएको हुनाले ध्यान गर्न बसें । तर त्यतिबेला मैले भने ध्यानै गर्न सकिन किनकि आँखा बन्द गऱ्यो कि गुरुदेवहरू अघि-पछि चारैतिर आएर बस्नुहुन्छ, फेरि होइन कि भनेर आँखा चिम्लँदा गुरुदेवहरू आउनुहुन्छ । उहाँहरूले 'तैंले ध्यान गर्नु पर्दैन, मेरो स्मरण मात्रै गर' भन्नुभयो । मैले आँखा चिम्लिनै सकिन र ध्यान पनि गरिनँ ।

मलाई अलिकति मात्र पीर पर्दा गुरुदेवहरूले नै सपनामा भए'नि ध्यानमा भए'नि दर्शन दिनुहुन्छ । गुरुदेवहरूलाई देखेपछि मलाई भने रुन आइहाल्छ । ०६४ सालको कुरा हो । दिन सम्झन सकिन । राति सपनामा मेरो घरको सबैभन्दा माथिबाट गुरुदेवले म बसेको कोठापट्टि हेरिरहनुभएको थियो । गुरुदेवले सेतो पहिरन पहिरिनुभएको थियो र शिरमा फेटा बाँध्नु भएको थियो । मैले बाहिर आएर हेरें । उहाँले 'तँ डराउनु पर्दैन, मैले तेरो घरको रेखदेख गरेको हुँ' भन्नुभयो ।

यी बाहेक अन्य अनुभूतिहरू पनि छन्, तिनलाई पनि अनुकूल मिलेमा बताउँदै जानेछु । अनुभूति लेख्ने क्रममा भएका सम्पूर्ण प्रकारका त्रुटिहरूलाई गुरुचरणमा राख्दै बिदा हुन्छु– जय गुरुदेव !

– रूपा अर्याल
घट्टेकुलो, काठमाडौं ।

# परमपूज्य सद्गुरुदेवको अवतरण यात्रा

**यस स्तम्भअन्तर्गत परमपूज्य सद्गुरुदेव परमहंस स्वामी श्री निखिलेश्वरानन्द महाराजको रहस्य नै रहस्यले भरिएको अवतरण यात्रालाई क्रमशः प्रकाशित गर्दै आएका छौँ । आशा छ यसबाट पाठकवर्ग लाभान्वित हुनुहुनेछ ।**

## उद्भट दार्शनिक तथा उच्चतम संगीतज्ञ

परमपूज्य गुरुदेव अमरकंटकमा एउटा अग्लो शिलामा बस्नुभएको थियो । उहाँले एउटा ढुंगा उठाएर शिष्यहरूसँग 'यो के हो ?' भनेर सोध्नुभयो । सबैले उक्त ढुंगालाई आफ्नो हातमा लिएर भने– यो त ढुंगा हो । गुरुदेवले सम्झाउनुहुँदै भन्नुभयो– यो सब थोक हुन सक्ला तर ढुंगा भने हुनै सक्दैन । उहाँले शिष्य निर्मलदेवलाई ढुंगा उठाएर उभिन भन्नुभयो र उक्त ढुंगालाई निर्निमेष दृष्टिले हेर्न लाग्नुभयो । केही समयपछि नै उक्त ढुंगा जुहीको फूलमा बदलियो । गुरुदेवले स्पष्ट पार्नुभयो– हाम्रो दृष्टिपथमा जे छन्, त्यो आफैमा सम्पूर्ण हो तर त्यसको यो सम्पूर्णता नै अर्को दृष्टिमा अपूर्णता हो किनकि हामीले जे जति कुरा देख्दछौँ त्यो त्यसको एउटा भाग मात्र हुन्छ । यसलाई जब हामीले सम्पूर्णतामा समावेश गर्दछौँ तब देखिएको वस्तुको विलीनीकरण हुन जान्छ । गुरुदेवद्वारा हाम्रो दृष्टिपथमा परेका वस्तुको पूर्णता र अपूर्णताको अद्भुत व्याख्या भएको छ । त्यसै प्रकारले जीवन-दर्शनमाथि स्पष्ट पार्दै उहाँले भन्नुभयो– 'जीव' मायामा ग्रस्त छ; 'वन' ब्रह्मबाट, आनन्दबाट, मुक्तावस्थाबाट भरिएको छ, यसैलाई नै 'जीवन' भनिन्छ । अति सरल भाषामा यति गूढ रहस्य स्पष्ट गर्नु वास्तवमा पूज्य गुरुदेवका लागि मात्र सम्भव छ । पूज्य गुरुदेव डा. नारायण दत्त श्रीमालीज्यू वर्तमान युगका अद्वितीय दार्शनिक हुनुहुन्छ । उहाँबाट दर्शन चेतना प्राप्त गर्नु जीवनको उपलब्धि हो ।

पूज्य गुरुदेवजस्तो संगीतज्ञ आजको संसारमा कोही छँदै छैन । उहाँले प्राण धुन बजाउनुहुँदा, गाउनुहुँदा

त हजारौँ-हजारको भीडलाई आफैसँग रुवाउनुहुन्छ, हँसाउनुहुन्छ, नचाउनुहुन्छ। चाहे त्यो अनाहत नाद होस् वा आहत नाद होस्, गुरुदेव त दुवैमा निष्णात् हुनुहुन्छ। आजको युगमा तीनै प्राणको अर्थ, चिन्तन तथा त्यसको उपयोग कसैले जान्दैन तर गुरुदेवका लागि केही पनि असम्भव छैन। स्वर्गीय संगीतको आनन्द उनै संगीतज्ञले दिन सक्दछन् जसले गान्धार ग्रामलाई जानेका छन् तथा धरतीमा ल्याउने सामर्थ्य राख्दछन्। सन् १९८९ मा लखनऊमा गुरु पूर्णिमा पर्व सम्पन्न भएको बेला गुरुदेव अवध होटेलमा बस्नुभएको थियो। रात छिप्पिइसकेको थियो। होटेलमा लखनऊ शहरका ठूलठूला अफिसर, आई.ए.एस. पदाधिकारी आदि बसेका थिए। देव संगीतमाथि चर्चा भइरहेको थियो। गुरुदेवले सबैको इच्छा बुझेर तबला, हारमोनियम आदिलाई आफ्नो चरणमुनि राख्नुभयो र पाउलाई कपडाले ढाकिदिनुभयो। तब प्रारम्भ भयो संगीत, सबैजना त्यसमा लीन भए। चार घण्टा कसरी बित्यो, कसैलाई थाहा नै भएन।

अहिले यस धरतीमा ओढवभन्दा तलका अन्य जातिहरूको ज्ञान धेरै कम मानिसलाई थाहा छ। पूज्य गुरुदेव ती व्यक्तित्वहरूमध्ये एक यस्तो व्यक्तित्व हुनुहुन्छ जसले यी सबै जातिहरूको गरिमा र महिमालाई बचाइराख्नुभयो। यी जातिहरू मुख्य रूपमा वेद मन्त्रोच्चारण आदिमा प्रयुक्त हुन्छन्।

गुरुदेवसँग नृत्य तथा मुद्राहरूको ज्ञान अन्यतम छ जसको थाह पाउन सम्भव छैन। यी मुद्राहरूको तात्त्विक चिन्तन, नृत्यमा उपयोग रोग निवारक क्षमता आदिको ज्ञान एक मात्र उहाँलाई छ।

पूज्य गुरुदवको चरणमा बसेर यदि संगीतको विधिवत् ज्ञान प्राप्त गर्न वा गन्धर्व दीक्षा प्राप्त गर्न सकिएमा यो जीवनको नै उपलब्धि बन्दछ। क्रमश: जय गुरुदेव !

# ।। योगश्चित्तवृत्तिनिरोधः ।।

कल्पना गर्नोस् त कसैको छोराले पढेन, कसैको श्रीमतीले भनेको मानिनन्, अफिसमा हाकिमले गाली गरे, ऋण दिएको पैसा फिर्ता भएन, विदेश जाने प्रयास गरियो भिसा लागेन... यस्ता हरेक घटनासँगै कसको दिमाग नतात्ला ? कसको मन अस्थिर नहोला ? सरसर्ती हेर्ने हो भने आजको सारा विश्व नै यस्ता हजारौँ प्रकारका मानसिक तनावबाट पीडित भएको पाउँछौँ । समाजमा विरलै यस्ता मानिसहरू भेटिन्छन् जो मानसिक तनावहरूबाट अछुतो होस् । सयौँ अतृप्त इच्छा, आकांक्षाहरू र समस्या नै समस्याहरूको थुप्रो अनि पलपलमा बाधा र अड्चन ! कसलाई नैराश्यता (Frustration) र अवसाद (Depression) नहोला ?

आजकालको फेसनरूपी शरीर मर्काउने योगबाट केही टाढा जाऔं... योगको मौलिक स्वरूप अर्थात् मूल स्वरूपको खाका प्रमुख तीन प्राचीन ग्रन्थहरूबाट प्राप्त गर्न सक्छौँ– १. प्राचीन उपनिषद्, २. श्रीमद्भगवद्गीता र ३. पातञ्जलयोगसूत्र ।

विभिन्न सन्दर्भहरूमा योगेश्वर भगवान् श्रीकृष्णले गीतामा उजागर गर्नुभएको छ-

'तं विद्याद् दु:खसंयोगवियोगं योगसंज्ञितम्...'
-(गीता ६/२३)

अर्थात् सम्पूर्ण प्रकारका दु:ख र यसका कारणहरूबाट वियोग हुनु नै योग हो । गीतामै उल्लिखित दोस्रो परिभाषानुसार-

'... योग: कर्मसु कौशलम्' -(गीता २/५०)

अर्थात् कर्ममा कुशलता ल्याउने तत्त्वको नाम नै योग हो । कर्ममा त्यस्तो कुशलता आओस् जसको माध्यमबाट हामी यस सांसारिक मोह र बन्धनबाट, तृष्णाबाट छुटकारा पाउन सकौं, प्रकृतिमा लीन हुन सकौं । सारा विश्व नै तनाव ग्रस्त हुनु, शान्ति, आनन्द नहुनु, मोह-बन्धनमा बाँधिनुको मूल कारण नै आफ्नो कर्ममा कुशलता नभएर हो । कर्म गर्दा यस्तो होशियार हुनुपर्‍यो कि हामीले गरेको कार्य बन्धनको कारण नबनोस्, कर्म गर्दा आफ्नो क्षमता र दक्षताअनुसारको होस् जसबाट वर्तमान् र भविष्यमा कुनै व्यवधान खेप्न नपरोस् । यही नै योगको मूल मर्म हो । यही मर्म समातेर कर्म गरियो भने मानिस दु:खी हुनु पर्दैन, सफल भए पनि ठीक, असफल भए पनि ठीक । निष्काम कर्मबाट नै सारा विश्व तनावरहित हुन सक्छ र तनावरहित मन-मस्तिष्कबाट गरिएका हरेक आध्यात्मिक तथा सांसारिक क्रियाकलापहरूमा सफलता र निखारता आउने सम्भावना बढी हुने भयो भने परमात्मासँगको योगमा सुगमता हुने भयो । त्यसैले विशिष्ट प्रकारको कौशलता प्रयोग गरेर निष्काम भावले गरिएको कर्म नै योग हो । तर कतिपयले गीताको यस दिव्य परिभाषा मोडेर संकुचित बनाएर पनि बुझ्न सक्छन् अर्थात् आफ्ना सम्बन्धित कामहरूमा कुशलता ल्याउनुलाई मात्र योग हो भन्ने पनि अर्थ लगाउन सक्छन् । तर यस परिभाषाको मर्म त्यस्तो होइन ।

'अनाश्रित: कर्मफलं कार्यं कर्म करोति य: । स संन्यासी च योगी च ..... न ह्यसंन्यस्तसङ्कल्पो योगी भवति कश्चन' -(गीता ६/१-२)

फलमा अनाश्रित भएर कर्म गर्ने व्यक्ति नै वास्तवमा योगी हो र संन्यासी पनि हो ।

'... समत्वं योग उच्यते' -(गीता २/४८)

अर्थात् फलको तृष्णाबाट रहित भएर कर्मको सिद्धि र असिद्धिमा सम भाव राख्नु नै योग हो ।

'योगश्चित्तवृत्तिनिरोध:' - (पातञ्जल योगसूत्र १/२)

'तदा द्रष्टु: स्वरूपेवस्थानम्' - (योगसूत्र १/२)

चित्त अर्थात् मनका वृत्तिहरूलाई नाश गर्नु नै योग हो । जब चित्तका वृत्तिहरूको नाश हुन्छ, निरोध हुन्छ त्यस समय आत्मा आफ्नो मूल स्वरूपमा अवस्थित हुन्छ । उक्त चित्तवृत्तिहरूको निरोध केवल वैराग्य अर्थात् सांसारिक वस्तुहरूको भोग गरेर पनि त्यसप्रति अनासक्त रहेर हुन्छ । पातञ्जल योगसूत्रमा उल्लिखित यस श्लोकले नै योगको मूल अर्थ झल्काउँछ । चाहे आसनको अभ्यास गरौं, प्राणायामको, ध्यानको वा अन्य आध्यात्मिक क्रियाकलापहरूको अभ्यास गरौं ती सबैको मूल लक्ष्य नै चित्तवृत्तिनिरोध हो । मनका सम्पूर्ण प्रकारका विकारहरू, विषय आसक्तिहरू नाश गर्नु हो, सत्य, असत्य, ठीक, बेठीकको निर्क्योल गरेर सत्य स्वरूपमा लाग्न प्रेरित गर्नु हो । जब मनमा कुनै विकार, आसक्ति र चिन्तन हुँदैन तब प्रकृतिसँगको सामीप्यता बढ्दछ, वैराग्यको बीज उम्रन थाल्दछ तब त्यस अदृश्य परम तत्त्वसँगको सायुज्यता बढ्न थाल्दछ र वास्तवमा नै योगको द्वार खुल्न पुग्दछ ।

शङ्कराचार्यले पनि योगलाई समाधि, समाधान तथा चित्त समाधानको रूपमा वर्णित गर्नुभएको पाइन्छ-

'योगो युक्ति: समाधानं, समाधानं योग:, योगं मन: समाधानं । योग: चित्तसमाधानम् ।' त्यसैले योगको अन्तिम सार नै चित्तका वृत्तिहरूको निरोध गर्नु हो ।

जय गुरुदेव !

# आत्मिक निवेदन

आत्मीय पाठकवर्ग,

'गोरक्ष निखिल वाणी' पत्रिका यहाँहरुलाई कस्तो लागिरहेको छ ? अनेक बाधा, अड्चन एवं समस्याहरुका बावजुद पत्रिकालाई निरन्तरता दिँदै प्रबुद्ध, पाठकहरुको कसीमा आफूलाई घोट्दै शुद्धता एवं स्तरीयतामा क्रमशः वृद्धि गर्दै जाने हाम्रो संकल्प एवं प्रयास रहँदै आएको छ । भौतिकतामा चुर्लुम्म डुबेको आजको समाजमा एउटा आध्यात्मिक पत्रिकालाई नियमितता दिनु र आफ्नो खुट्टामा उभिन सक्ने बनाउनु भनेको निश्चय पनि असम्भवजस्तो लाग्दछ । तर परमपूज्य सद्गुरुदेवहरुको आशीर्वादले यो असम्भवलाई सम्भव बनाउने कार्य तपाईंहरुबाटै भइसकेको छ । पत्रिकालाई युगौं-युगसम्म जीवन्त राखी आउँदो पुस्तालाई हाम्रो आध्यात्मिक धरोहरको रुपमा हस्तान्तरण गर्ने जिम्मेवारी पनि तपाईं, हाम्रै काँधमा आएको छ ।

प्रत्येक व्यक्ति स्वयं आध्यात्मिक पथमा अग्रसर भई आफ्नो परिवार, टोल, छिमेक, समाज, गाउँ, सहर, जिल्ला, अञ्चल हुँदै सम्पूर्ण देश अनि सम्पूर्ण विश्वलाई नै अध्यात्ममय बनाउने महान् अभियानलाई मूर्तरुप दिन पत्रिका सबैभन्दा सशक्त माध्यम बन्न सक्छ । अतः पत्रिका सदस्यता विस्तारको कार्यक्रममा यहाँहरुको सहयोगको अपेक्षा गर्दछौं ।

पत्रिकाको बिक्री मूल्य रू. ३०।- मात्र भएकोले तपाईंले कम्तिमा दसवटा पत्रिका मगाएर आफ्ना नाता-गोता, छरछिमेकमा बाँड्न सक्नुहुन्छ । तपाईंको घर, टोल, छिमेक वा नातागोतामा कहीं पनि पूजा-आजा, हवन, विवाह, व्रतबन्ध, सप्ताह, जन्मदिन, मेला, पर्व, महोत्सव आदि हुँदैछन् भने त्यहाँ पत्रिकाको स्टल राखेर यसको महत्वबारे जानकारी गराउनुका साथै वार्षिक सदस्यताका लागि प्रेरित गर्न सक्नुहुन्छ ।

यसका अलावा टाढा-टाढा रहेका आफ्ना नाता-गोता, मित्रजनहरुलाई हुलाकमार्फत पत्रिका पठाउन सक्नुहुन्छ । यसो गर्दा आत्मिक सम्बन्ध अझ प्रगाढ हुन जान्छ ।

यो पत्रिका यहाँहरुको आफ्नै भएकोले यसलाई फलाउने, फुलाउने र फैलाउने जिम्मा पनि यहाँहरुकै हो । यसैले, सम्पूर्ण पाठकहरुमा हाम्रो आत्मिक निवेदन छ– आफूलगायत कम्तिमा पाँचजना वार्षिक सदस्य बनाउने संकल्प आजकै दिनदेखि गरौं ।

यहाँहरु सबैको सहयोगले पत्रिकाको सदस्य सङ्ख्या निरन्तररुपमा वृद्धि हुँदै जानेछ जसले गर्दा पत्रिकालाई अझ स्तरीय एवं आकर्षक बनाउन मद्दत मिल्नेछ भन्ने कुरामा हामी विश्वस्त छौं ।

वार्षिक सदस्यताको लागि रु. ३५०।- (अक्षरेपी रु. तीन सय पचास मात्र) हामीलाई पठाउनुहोस् । त्यसपछिको बाँकी काम हामी गर्नेछौं ।

अन्तमा, आत्मीय पाठकवर्गहरुमा विनम्र अनुरोध छ कि पत्रिकाको स्वयंले अध्ययन गरौं एवं आफ्नो परिवार तथा इष्टमित्रलाई पनि पढ्न अनुरोध गरौं । यसका अलावा अन्य पाँचजना व्यक्तिलाई पढाउने प्रयास गरौं ।

संसारको सबैभन्दा ठूलो दान ज्ञान दान हो, तपाईंको सानो दानले कसैको जीवनमा नयाँ मोड आउन सक्छ, जीवनमा सदाबहार छाउन सक्दछ । त्यसैले परमपूज्य सद्गुरुदेवहरुको महान् योजनालाई मूर्तरुप दिँदै चरितार्थ गराउन आजदेखि गुरु कार्यमा सहभागी बनौं र यस योजनालाई आ-आफ्नो तरीकाबाट सहयोग गरौं ।

पत्रिकाको बिक्री हाम्रो उद्देश्य होइन, अपितु परमपूज्य सद्गुरुदेवहरुको असीम अनुकम्पाले प्रत्येक जन-जनमा गोरक्ष निखिल ऊर्जाको सञ्चार गरी आध्यात्मिक युगको पुनः निर्माण गर्नु हो ।

अस्तु ।

## मासिक हवन कार्यक्रम

परमपूज्य सद्‌गुरुदेवहरूको परम कृपा, अनुकम्पा एवं आशीर्वादस्वरूप २०६६ सालको वैशाख महिनामा सिद्धाश्रम शक्ति केन्द्रले मासिक हवन कार्यक्रमहरूलाई भव्यरूपमा सम्पन्न गऱ्यो । हवन कार्यक्रमहरूअन्तर्गत वैशाख १ गते तान्त्रोक्त वटुक भैरव हवन कार्यक्रम लगनखेलस्थित वटुक भैरव मन्दिर प्रांगणमा, वैशाख २ गते तान्त्रोक्त महालक्ष्मी हवन कार्यक्रम लगनखेलस्थित महालक्ष्मी मन्दिर प्रांगणमा, वैशाख ३ गते तान्त्रोक्त बगलामुखी हवन कार्यक्रम पाटन कुम्भेश्वर स्थित बगलामुखी मन्दिर प्रांगणमा तथा वैशाख ७ गते श्री शिव गोरक्ष हवन कार्यक्रम पशुपति मृगस्थलीस्थित गुरु गोरखनाथको मन्दिर प्रांगणमा सम्पन्न भयो । उपरोक्त हवन कार्यक्रमहरूमध्ये तान्त्रोक्त वटुक भैरव हवन कार्यक्रम बिहान ७:०० बजेदेखि ८:०० बजेसम्म तथा अन्य हवन कार्यक्रमहरू बिहान ८:०० बजेदेखि ९:०० बजेसम्म सञ्चालन भएको थियो ।

गत महिनाबाट मासिक हवन कार्यक्रमहरू पनि शुभारम्भको विभिन्न वर्षमा प्रवेश गरेका छन् । जसमा गत वैशाखबाट तान्त्रोक्त बगलामुखी हवन कार्यक्रम १० औं वर्षमा, श्री शिव गोरक्ष हवन कार्यक्रम ८ औं वर्षमा, तान्त्रोक्त महालक्ष्मी हवन कार्यक्रम ७ औं वर्षमा तथा तान्त्रोक्त वटुक भैरव हवन कार्यक्रम छैटौं वर्षमा प्रवेश गरेका छन् ।

यस्तै मासिक हवनकै शृङ्खलामा सम्पर्क कार्यालय रामघाट पोखराको आयोजनामा गत वैशाख २ गते बुधबार स्थानीय विन्ध्यवासिनी मन्दिर प्रांगणमा तान्त्रोक्त विन्ध्यवासिनी हवन कार्यक्रम सम्पन्न भयो भने यता सम्पर्क कार्यालय तनहुँको आयोजनामा वैशाख ३ गते बिहीबार स्थानीय वेद व्यास गुफा परिसरमा तान्त्रोक्त महर्षि वेदव्यास हवन कार्यक्रम सम्पन्न भयो । यी हवन कार्यक्रमहरू पनि बिहान ८:०० देखि ९:०० बजेसम्म सञ्चालन भएका थिए ।

## गो.नि.ज्यो.दि.विद्याश्रमको चौथो वार्षिकोत्सव

सिद्धाश्रम शक्ति केन्द्र, नेपालको व्यवस्थापनमा सञ्चालित गोरक्ष निखिल ज्योति दिव्य विद्याश्रमले गत वैशाख ५ गते आफ्नो चौथो वार्षिकोत्सव हर्षोल्लासका साथ भव्य कार्यक्रमका बीच मनायो । विद्याश्रम प्रांगणमा बिहान ११:०० बजे प्रार्थना, सद्‌गुरुदेवहरूको स्तुति वन्दना तथा सरस्वती स्तुतिबाट शुभारम्भ भएको उक्त कार्यक्रममा गुरु पूजन, सरस्वती पूजन, भजन-कीर्तन, पुरस्कार वितरण, अभिनन्दन, प्रगति विवरण आदि क्रमहरू हुँदै दिउँसो ४:०० बजे समापन गरिएको थियो ।

कार्यक्रममा विद्याश्रमको तर्फबाट निमित्त प्रधानाध्यापक साधक मनोहर अधिकारीले स्वागत मन्तव्य राख्नुभएको थियो । विभिन्न कक्षामा अध्ययनरत विद्यार्थी भाइ-बहिनीहरूले भजन, रिमिक्स, राइम्स, हिन्दी नेपाली गीतहरू, नृत्य आदि प्रस्तुत गरेका थिए । गत शैक्षिक सत्रमा शैक्षिक तथा विभिन्न अतिरिक्त क्रियाकलापहरूमा सहभागी भई उत्कृष्ट भएका छात्र-छात्राहरूलाई कार्यक्रममा सा.प. १, २, ३ र ४ का सदस्यज्यूहरूले पुरस्कार प्रदान गर्नुका साथै विद्याश्रमको अक्षयकोष स्थापनार्थ सहयोग गर्नुहुने साधक साधिकाहरूलाई अभिनन्दन गर्नुभएको थियो । कार्यक्रममा विद्याश्रमका विभिन्न नयाँ परिवर्तित पक्ष, प्रशासनिक विषयहरूका बारेमा पनि उपस्थित अभिभावक तथा अन्य महानुभावहरूलाई जानकारी गराइएको थियो ।

विद्याश्रमको गत सालमा भएका प्रगति विवरण तथा अन्य विषय प्रस्तुत गर्नुहुँदै सावरपन्थी नं. ३ का सदस्यज्यूले विद्याश्रमले आधुनिक तथा आध्यात्मिक शिक्षा प्रदान गरिरहेकोले भविष्यमा समाजलाई परिवर्तन गर्न सक्ने दक्ष जनशक्तिहरू उत्पादन केन्द्रको रूपमा विद्याश्रमलाई परिभाषित गर्नुभएको थियो । कार्यक्रमको अन्त्यतिर विद्याश्रमका उप-प्रधानाध्यापक विनोदप्रसाद बरालले उपस्थित पाहुना, विद्यार्थीलगायत कार्यक्रम सफल पार्न सहयोग गर्नुहुने सम्पूर्ण महानुभावहरूलाई धन्यवाद ज्ञापन गर्नुभएको थियो । कार्यक्रमको समापनपछि प्रसाद ग्रहणको क्रम पनि राखिएको थियो ।

## गुरुसेवा दलको आकस्मिक प्रशिक्षण

गत चैत्र २९ गते गुरुसेवा दलका लागि आकस्मिक प्रशिक्षण कार्यक्रम सम्पन्न भयो । नयाँ वर्षको आगमनको केही दिन अगाडि शुरु भएको यस प्रशिक्षणलाई विभिन्न सत्रमा विभाजन गरिएको थियो । प्रशिक्षणमा संस्थाको आगामी कार्य योजनाका बारेमा प्रकाश पारिएको थियो । संस्था सावर पन्थी शैलीबाट अज्ञात नाथ पन्थी शैलीमा प्रवेश गरेको सन्दर्भमा शैलीगत रूपमा संस्थामा आमूल परिवर्तन हुने जानकारी प्रशिक्षणमा दिइएको थियो । उक्त प्रशिक्षणमा विशेष ध्यानको विधि पनि प्रदान गरिएको थियो ।

## शुभकामना सहितको प्रशिक्षण कार्यक्रम

परमपूज्य सद्‌गुरुदेवहरूको असीम कृपा, अनुकम्पा एवं आशीर्वादस्वरूप सञ्चालित सिद्धाश्रम शक्ति केन्द्रले २०६६ साल वैशाख १ गते सम्पूर्ण तालिम प्राप्त कार्यकर्ताहरूका लागि शुभकामना सहितको प्रशिक्षण कार्यक्रम सम्पन्न गऱ्यो । गोरक्ष निखिल ज्योति दिव्य विद्याश्रमको प्रांगणमा सञ्चालित उक्त कार्यक्रम बिहान ११:०० बजे प्रार्थना, स्तुति वन्दनाबाट शुरु भई भजन-कीर्तन, नृत्य तथा प्रशिक्षणका साथ अगाडि बढेको थियो ।

प्रशिक्षणमा संस्थाको अब आउने संगठनात्मक स्वरूप अज्ञात नाथ पन्थी (अ.ना.प.) को शैलीमा हुने भएकाले त्यसको लागि सम्पूर्ण कार्यकर्ताहरूले आफूलाई रूपान्तरण गर्नुपर्ने र यसका लागि आफूलाई तयारी अवस्थामा राख्नुपर्नेमा प्रशिक्षकज्यूहरूले जोड दिनुभएको थियो ।

प्रशिक्षणको क्रममा सावर मातृकाज्यूले नयाँ वर्षको शुभकामना दिनुहुँदै आगामी दिनमा गुरुकार्य शुरु गर्नुअघि पूर्वनिर्धारित संख्यामा मन्त्र जप (जप हुन नसक्ने खण्डमा ध्यान) गर्नुपर्ने सद्‌गुरुदेवबाट प्राप्त आदेश पढेर सुनाउनुभएको थियो ।

यस्तै, सावर पन्थी नं. ३ का सदस्यज्यूले नयाँ संरचनाको बारेमा विविध जानकारी दिनुहुँदै अ.ना.प. शैलीमा संगठनमा व्यापक फेरबदल हुनसक्ने बताउनुभएको थियो । उहाँले सिद्धाश्रम शक्ति केन्द्रको मासिक प्रकाशन गोरक्ष निखिल वाणीको बारेमा विभिन्न जानकारीहरू पनि प्रदान गर्नुभएको थियो ।

यसैगरी, सावर पन्थी नं २ का सदस्यज्यूले 'सद्‌गुरुदेव अवतरण दिवस' तथा 'रोट महोत्सव'को महत्त्वको बारेमा बोल्नुभएको थियो । यी कार्यक्रमहरू हाम्रा लागि महापर्व भएकाले यी पर्वहरूलाई सफल बनाउन आफ्नो तर्फबाट जे जति गर्न सकिन्छ गर्नुपर्ने तर्फ उहाँले औँल्याउनुभएको थियो ।

प्रशिक्षणको अन्तिम सत्रमा सावर पन्थी नं. १ का सदस्यज्यूले आध्यात्मिक खुराक पस्कनुभएको थियो । हरेक प्रकारका आध्यात्मिक विषयवस्तुहरू प्रदान गर्न सिद्धाश्रम शक्ति केन्द्र सक्षम रहेको र यसको लागि कार्यकर्ताहरूले आफूमा भएका न्यूनता, कमी-कमजोरीहरूलाई क्रमशः हटाउँदै जानुपर्नेमा उहाँले जोड दिनुभएको थियो ।

अपराह्न ३:०० बजे कार्यक्रमको अन्त गरिएको थियो ।

## कासस ङ र च को तालिम

परमपूज्य सद्‌गुरुदेवहरूको असीम कृपा, अनुकम्पा एवं आशीर्वादस्वरूप सिद्धाश्रम शक्ति केन्द्रले हरेक महिना विभिन्न तह र तप्कामा रहेर गुरुकार्य गर्ने कार्यकर्ताहरूलाई तहगतरूपमा तालिम तथा प्रशिक्षण प्रदान गर्दै आइरहेको क्रममा गत वैशाख २० र २१ गते कार्यकर्ता सहायक समूह ङ र चका लागि द्विदिवसियरूपमा दोस्रो तालिम तथा प्रशिक्षण कार्यक्रम सम्पन्न गऱ्यो । तालिममा सहभागी हुन देशका विभिन्न जिल्लाहरूबाट कार्यकर्ताहरू आउनुभएको थियो । तालिम कार्यक्रम बिहान ६:३० बाट शुभारम्भ भएको थियो । प्रार्थना र सद्‌गुरुदेवहरूको स्तुति वन्दनाबाट शुभारम्भ भएको तालिम कार्यक्रममा प्रशिक्षार्थीहरूलाई विभिन्न विषयमा प्रशिक्षण प्रदान गरिएको थियो । कार्यक्रमको बीच-बीचमा विभिन्न भजन तथा नृत्यहरू पनि प्रस्तुत गरिएका थिए ।

कार्यक्रममा गुरु पूजनको क्रममा पहिलो दिन कासस ङबाट कार्यकर्ताहरू कृष्णकुमारी पौडेल, प्रेम कुमारी सिग्देल, खेसरीप्रसाद पन्त, हरिमाया के.सी., तथा कासस चबाट कार्यकर्ताहरू युवराज बस्नेत, विष्णु श्रेष्ठ, अर्चना पन्त, अनिता धितालले पूजन गर्ने सौभाग्य पाउनुभएको थियो भने दोश्रो दिन ङबाट दलबहादुर श्रेष्ठ, रामनाथ राजथला, सुन्तली के.सी., सुमित्रा भट्ट तथा चबाट मंगलालक्ष्मी श्रेष्ठले उक्त सौभाग्य प्राप्त गर्नुभएको थियो ।

कार्यक्रममा प्राप्त ग्रेडिङ अनुसार कासस ङबाट कासस घमा २७ जना कार्यकर्ताहरू प्रमोशन हुनुभएको थियो भने का.स.स. चबाट ङमा ६१ जना कार्यकर्ताहरू प्रमोशन हुनुभएको थियो ।

**स्वर्गीय विकुलाल प्रधानाङ्ग**

हाम्रा पति/बुबा विकुलाल प्रधानाङ्गको असामयिक स्वर्गारोहण भएकोमा उहाँको आत्माको चीर शान्तिका लागि परमपूज्य सद्‌गुरुदेवहरूको चरणकमलमा सभक्ति प्रार्थना गर्दछौं ।

**पत्नी– धनमाया प्रधानाङ्ग** **छोरा– आशिष प्रधानाङ्ग**

**छोरी– वर्षा प्रधानाङ्ग**

**बसुन्धरा (काठमाडौं)**: अक्षय तृतीयाको पावन दिन अर्थात् गत वैशाख १४ गते सिद्धाश्रम शक्ति केन्द्र नेपालले सातु र सख्खर पानी वितरण गऱ्यो । साँझ आरतीपछि उक्त प्रसाद वितरण गरिएको थियो ।

**म्हैपी (काठमाडौं)**: सिद्धाश्रम शक्ति केन्द्र म्हैपी आरती संचालन केन्द्रले गत वैशाख ८ गते आफ्नो प्रथम वार्षिकोत्सव मनाउने क्रममा आरती संचालन केन्द्र र योगाम्बर ज्ञानेश्वरी (म्हैपी अजिमा) को मन्दिरमा लाख बत्ती अर्पण गऱ्यो ।

**सानोभऱ्याङ (काठमाडौं)**: सिद्धाश्रम शक्ति केन्द्र सानो भऱ्याङ आरती कक्षले गत वैशाख ११ गते स्वयम्भूको सफाइ गर्नुका साथै त्यहाँ बत्ती बालेर कार्यक्रम सम्पन्न गऱ्यो ।

**नरदेवी (काठमाडौं)**: सिद्धाश्रम शक्ति केन्द्र नरदेवी प्रचार प्रसार केन्द्रले गत वैशाख १४ गते अक्षय तृतीयाको दिनमा नरदेवीस्थित कंकेश्वरी मन्दिर परिसरको सरसफाइ कार्यक्रम सम्पन्न गऱ्यो ।

**कीर्तिपुर (काठमाडौं)**: सिद्धाश्रम शक्ति केन्द्र, आरती सञ्चालन केन्द्र, कीर्तिपुरको आयोजनामा गत चैत्र २९ गते आयुर्वेद क्याम्पस कीर्तिपुरमा प्रचार प्रसार कार्यक्रम सम्पन्न भयो । संगीतमय र नृत्यमय वातावरणमा सम्पन्न उक्त कार्यक्रममा हवनको वैज्ञानिकता सम्बन्धमा दृष्य सामग्री समेत देखाइएको थियो ।

**सौरपानी (गोरखा)**: सि.श.के, सम्पर्क कार्यालय सौरपानी तथा युनिभर्सल एकीकृत स्वास्थ्य अनुसन्धान तथा विकास फाउन्डेशन(UIHRDF) बल्खुको संयुक्त आयोजनामा गत वैशाख १९ गते श्री शैलपुत्री मा.वि.,पाँचखुवा, देउराली गा.वि.स., गोरखामा आयुर्वेद स्वास्थ्य शिविर सम्पन्न भयो। आयुर्वेद तथा एलोप्याथिक औषधिहरू पनि नि:शुल्क वितरण गरिएको थियो उक्त कार्यक्रममा महत्त्वपूर्ण जडिबुटीहरूको प्रदर्शनी, तिनीहरूको परिचयका र प्रयोगको बारेमा पनि जानकारी दिइएको थियो । साथै भिडियोमार्फत आयुर्वेद र स्वास्थ्य सम्बन्धी, ध्यान, आरती र सिद्धाश्रम शक्ति केन्द्रसम्म्बन्धी चेतनामूलक जानकारीहरू पनि प्रदान गरिएको थियो ।



**बबरमहल (काठमाडौं)**: सिद्धाश्रम शक्ति केन्द्र बबरमहल आरती संचालन केन्द्रले गत चैत्र २४ गते आफ्नो प्रथम वार्षिकोत्सवको अवसरमा भजन-कीर्तन एवं दीपावलीको कार्यक्रम सम्पन्न गऱ्यो ।

# गुरु गीता

आत्मीय पाठकवर्ग, गुरुको महिमा र महत्त्वको बारेमा शास्त्रले उल्लेख गरेका विषयहरूलाई जनसमक्ष उजागर गर्दै गुरुप्रतिको सच्चा भाव र भक्ति जागृत गर्ने उद्देश्यले यस स्तम्भअन्तर्गत अर्थसहित प्रकाशित गर्दै आइरहेका छौँ ।

**एवं विधो महायुक्तः**
**सर्वत्र वर्तते सदा ।**
**तस्मात् सर्वप्रकारेण**
**गुरुभक्तिं समाचरेत् ॥१५९॥**

भावार्थ : बुद्धिमान् साधक सर्वत्र स्वात्म बुद्धिले युक्त भएर हरेक प्रकारले गुरुको आराधना गर्दछ । साधकका लागि गुरुको आराधना त्यति नै आवश्यक छ जति एउटा सानो शिशुका लागि आमा किनकि गुरुले पनि आमाले झैं शिष्यको लालन पालन गर्नुहुन्छ । गुरुले शिष्यलाई शिशुलाई झैं वातावरण दिएर नै साधना पथमा अग्रसर गराउनुहुन्छ र बिस्तारै बिस्तारै उसलाई उसको लक्ष्यसम्म पुऱ्याइदिनुहुन्छ । यस्तो कृपाका लागि शिष्यले सदैव उहाँप्रति कृतज्ञ हुनुपर्छ ।

**गुरु सन्तोषणादेव**
**मुक्तो भवति पार्वति ।**
**अणिमादिषु भोक्तृत्वं**
**कृपया देवि ! जायते ॥१६०॥**

भावार्थ : गुरु खुशी हुनुभएमा जीव सांसारिक बन्धनहरूबाट मुक्त हुन्छ र गुरुको कृपाले अणिमा, लघिमा आदि अन्तहीन सिद्धिहरूको भोक्ता हुन जान्छ । अणिमा आदि सिद्धिहरू गुरुका शक्ति हुन्, गुरु प्रसन्न हुनुभएमा ती सिद्धिहरू स्वतः नै शिष्यमा आउँछन् । तसर्थ गुरुकृपा नै पाउने प्रयास गर्नुपर्छ । त्यसो भएमा शिष्य जन्म-मृत्युको चक्करबाट मुक्त हुन्छ ।

**गुरुर्देवो गुरुर्धर्मो**
**गुरौ निष्ठा परं तपः ।**
**गुरोः परतरं नास्ति**
**त्रिवारं कथयामि ते ॥१६१॥**

भावार्थ : गुरु नै देवता हुनुहुन्छ, गुरु नै धर्म हुनुहुन्छ, गुरूप्रति निष्ठावान् हुनु नै परप तप हो र गुरुभन्दा माथि केही पनि छैन– म यही कुरा पटक-पटक भनिरहेको छु । 'गुरुदेव परब्रह्म' यस श्रुति वाक्यका अनुसार गुरु र ब्रह्ममा भिन्नता छैन, अभिन्न भएकै कारणले गुरुत्व नै सबैतिर व्याप्त छ । तसर्थ देवता, दानव, मनुष्य आदिमा प्राणरूप गुरुत्व नै छ । अतः शिष्यका लागि गुरुको आराधना सदैव अपेक्षित छ, यही कुरा म बारम्बार दोहोऱ्याइरहेको छु ।

**धन्या माता पिता धन्यो**
**गोत्रं धन्यं कुलोद्भवः ।**
**धन्या च वसुधा देवि**
**यत्र स्याद् गुरुभक्तिता ॥१६२॥**

भावार्थ : जुन कुलमा गुरुभक्तले जन्म लिन्छ, उसकी आमा धन्य छिन्, बाबु पुण्यवान् हुन्, गोत्र र कुल दुवै धन्य छन्, त्यो स्थान धन्य छ जहाँ गुरुको चर्चा हुन्छ । 'यस्मिन् विज्ञाते सर्वं विज्ञातम् भवति', गुरुत्वलाई बुझिसकेपछि बुझ्न लायक अरू केही बाँकी रहँदैन किनकि गुरुत्वभन्दा श्रेष्ठ कुनै तत्त्व छैन । यस तत्त्वलाई जान्ने व्यक्ति स्वयं त सौभाग्यशाली हुन्छ नै, त्यससँग जोडिएको हरेक सांसारिक पदार्थ वा व्यक्ति पनि धन्य-धन्य हुन्छ ।

**अनन्त कोटि जन्मानाम्**
**पूजा कर्म व्रतादयः ।**
**ते सर्वे निष्फलं यान्ति**
**गुरु निन्दा सदोन्मुखाः ॥१६३॥**

भावार्थ : गुरु निन्दा गर्ने साधक वा शिष्यका अनन्त जन्महरूमा गरेका पूजा, जप, तप, यज्ञ एवं विभिन्न शुभ कर्महरूबाट प्राप्त सहस्रकोटि पुण्य क्षणभरमा नै नष्ट भएर जान्छ । यो रहस्यलाई सधैं याद राख्नुपर्छ किनकि शिष्यका लागि गुरु निन्दा सर्वाधिक हानिकारक छ । तसर्थ, शिष्यले सदैव निर्मल, स्वच्छ एवं श्रद्धायुक्त भावले गुरुको ध्यान, चिन्तन एवं स्मरण गरिरहनुपर्दछ ।

**शरीरमिन्द्रियं प्राणः**
**चार्थः स्वजन बन्धुता ।**
**मातृकुलं पितृकुलं**
**गुरुरेव न संशयः ॥१६४॥**

भावार्थ : शरीर, इन्द्रिय, प्राण, धन-सम्पत्ति, स्वजन, स्वबन्धु-बान्धव, मातृकुल, पितृकुल यी सब गुरुकै लागि हुन् । सद्गुरु प्राप्त भएपछि यी समस्त वस्तुहरूको उपयोग गुरुको सेवार्थ गर्नुपर्छ अन्यथा यी सबै जीवनमा महत्त्वहीन हुन जान्छन् । तसर्थ, यिनीहरूको सदुपयोग सत्कार्यमा नै छ । गुरु जीवनका महत्त्वपूर्ण अङ्ग हुनुहुन्छ, उहाँ बिनाको जीवन रसहीन र उपयोगहीन हुन जान्छ । तसर्थ, जीवनको प्रथम तथा अन्तिम खोज गुरु नै हुनुहुन्छ ।

जय गुरुदेव !

# सद्‌गुरुदेव अवतरण दिवस

परमपूज्य सद्‌गुरुदेवहरुको परम कृपा, अनुकम्पा एवं आशीर्वादस्वरुप सिद्धाश्रम शक्ति केन्द्रले परमपूज्य सद्‌गुरुदेव डा. नारायण दत्त श्रीमालीज्यूको ७६ औँ अवतरण दिवस तथा सिद्धाश्रम शक्ति केन्द्रको १० औँ वार्षिकोत्सव कार्यक्रम गत वैशाख ८ गते (तदनुसार अप्रिल २१ तारीख) गोरक्ष निखिल ज्योति दिव्य विद्याश्रमको प्रांगणमा भव्यताका साथ सम्पन्न गर्‍यो। दुई चरणमा विभाजित उक्त कार्यक्रम बिहान ८:०० बजे प्रार्थना तथा गोरक्ष निखिल स्तवनको सामुहिक पाठबाट शुभारम्भ भई पहिलो चरणअन्तर्गत गुरु पादुका पूजन, मन्त्रजप, हवन, लक्ष्यदीप प्रज्ज्वलन, आरती आदि क्रमहरु सम्पन्न भएका थिए। कार्यक्रममा गुरु पादुका पूजन गर्ने सौभाग्य प्रसाद वितरणको अभिभारा वहन गर्दै साधक साधिकाहरु मीना थापा, मीनबहादुर थापा, भोजराज रेग्मी, सुनिता रेग्मी, महेश आचार्य, विदित आचार्य, आशा थापा, कुसुम थापा, नन्दमाया सिटौला, चञ्चला शर्मा, विमला पाण्डे, गणेशबहादुर पाण्डे, सोनी दवाडी, मोनी दवाडी, मधुकुमारी रायमाझी र मधुमति रंजितले प्राप्त गर्नुभएको थियो।

कार्यक्रमको दोस्रो चरणको शुभारम्भमा सावर मातृकाज्यूले संस्थाको तर्फबाट स्वागत मन्तव्य राख्नुभएको थियो। दोस्रो चरणका अन्य क्रमहरुमा स्वागत नृत्य, दीप प्रज्ज्वलन, भजन-कीर्तन, नृत्य, संस्थागत प्रतिवेदन, प्रवचन, विशेष ध्यान आदि रहेका थिए । स्वागत नृत्य ललितपुर सम्पर्क कार्यलयले प्रस्तुत गरेको थियो। संस्थाको दशौँ वार्षिकोत्सवको प्रतीकको रुपमा दशवटा दीयोहरु सावर पन्थी सदस्यज्यूहरुले बाल्नुभयो। सिद्धाश्रम शक्ति केन्द्रको लागि विगतको वर्ष कस्तो रह्यो भन्ने सन्दर्भमा सावरपन्थी नं. ३ का सदस्यज्यूले प्रतिवेदन पढेर सुनाउनुभएको थियो। नृत्यको क्रममा भक्तपुर सम्पर्क कार्यालय तथा बबरमहल आरती सञ्चालन केन्द्रबाट आ-आफूले तयार पारेका नृत्यहरु प्रस्तुत भएका थिए। भक्तपुरको अष्टमातृका नृत्यले पनि कार्यक्रममा विशेष आकर्षण दिन सफल भयो।

प्रवचनको क्रममा सावरपन्थी नं २ का सदस्यज्यूले सद्‌गुरुदेव अवतरण दिवस तथा गोरक्ष प्रकट दिवसको महिमा र गरिमाबारे प्रकाश पार्दै दुवै पर्व वैशाख महिनामा परेकोले यसको विशेष महत्त्व रहेको बताउनुभयो। एउटा रोट अर्पण गर्दा सिंगै पृथिवी दान गरे बराबरको पुण्य मिल्ने भएकाले यस कार्यमा कोही नछुट्न आग्रह गर्नुभयो। कार्यक्रमको अन्तिम सत्रतिर सावरपन्थी नं. १ का सदस्यज्यूले सात जना नाथ पन्थी योगीज्यूहरु परमपूज्य सद्‌गुरुदेवहरुको महान् योजना सफल गर्न सिद्धाश्रम शक्ति केन्द्रलाई सहयोग गर्न आउनुभएको रहस्योद्‌घाटन गर्नुहुँदै विशेष मुद्रा ध्यानको विधि अभ्यासमार्फत बुझाउनुभएको थियो। कार्यक्रमको अन्त्यतिर गाइएको ह्यापी बर्थ डे... को धुनमा सम्पूर्ण सहभागीहरु नृत्यमय हुँदै मस्तीमा झुम्नुभएको थियो साथै सो भजन कार्यक्रमको आकर्षणको रुपमा पनि रहेको थियो।

सावर पन्थी नं. ३ का सदस्यज्यूले सञ्चालन गर्नुभएको उक्त कार्यक्रममा २५०० भन्दा बढी साधक साधिका भक्तजनको उपस्थिति रहेको थियो। कार्यक्रम अपराह्न ४:०० बजे औपचारिकरुपमा प्रार्थना गरेर समापन गरिएको थियो।

सोही दिन बसुन्धरास्थित आश्रम भवनमा साँझ आरतीपश्चात् भजन-कीर्तनका साथमा दीपावली गरिएको थियो। सिद्धाश्रम शक्ति केन्द्रअन्तर्गतका विभिन्न सम्पर्क कार्यालयमा सो दिन विविध कार्यक्रमका साथ दीपावलीको आयोजना गरिएको थियो।

सावर संरचनाबाट प्राप्त

# दिव्य साधनात्मक सूत्रहरू

*मन्त्र साधनाको क्षेत्रमा अघि बढेर उच्चता हासिल गर्न चाहने सम्पूर्णका लागि अत्यन्त महत्त्वपूर्ण सूत्रहरू जसको अक्षरशः पालना गर्नाले मात्र सफलता प्राप्त हुन्छ, यस्ता दिव्यतम सूत्रहरू श्री सावर संरचना शक्ति केन्द्रद्वारा प्रकाशित तथा योगी शिवशक्तिश्वरानन्द एवं योगी कर्मवीरानन्दद्वारा रचित ग्रन्थ 'मन्त्र साधना–ऊर्ध्वसंगति'को खण्ड घ (सावर संरचनाबाट प्राप्त दिव्य साधनात्मक सूत्रहरू) पाठकवर्गको लाभार्थ क्रमशः प्रकाशित गर्दै आइरहेका छौँ । हामीलाई आशा एवं विश्वास छ, यी सूत्रहरूले यहाँहरूको साधनात्मक उच्चता प्राप्तिमा अवश्यमेव ठोस योगदान दिनेछन् ।*

## संघर्षशीलता

मन्त्र साधनामा अगाडि बढ्ने प्रत्येक साधक साधिकाले संघर्षशीलतालाई पार गर्नुपर्ने हुन्छ । जति संघर्षसँग जुध्दै अगाडि बढ्न सक्यो, त्यति नै साधनामा सफलता पनि प्राप्त गर्न सकिन्छ । मानव जीवन संघर्षमय छ, प्रतिपलको संघर्षसँग सम्झौता गर्दै, सामना गर्दै हामी अगाडि बढिरहेका हुन्छौँ । साधनामा अगाडि बढ्ने प्रत्येक साधक साधिकाले यस कुरालाई बुझ्नुपर्दछ कि संघर्ष हाम्रो जीवनको अभिन्न अङ्ग हो भनेर ।

जो केही गर्छु भनेर अगाडि बढ्छ, केही प्राप्तिको उद्देश्य, लक्ष्य राखी अगाडि बढ्छ, उसैले धेरै संघर्षको सामना गर्नुपर्दछ । घरमा बस्नेले होइन, बाहिर उत्रेर कार्य गर्नेले नै संघर्षको सामना गर्नुपर्दछ । आफ्नो लक्ष्यमा अग्रसर हुनेले नै विभिन्न दुःख-कष्ट, अप्ठ्याराहरूसँग लड्नुपर्ने हुन्छ । जे चिजको प्राप्ति पनि संघर्षबाट नै हुने गर्दछ । संघर्षबिनाको प्राप्ति पनि असम्भव नै हुन्छ । यसैले हाम्रो दैनिक जीवनका विभिन्न विषयवस्तुहरूमा पनि विभिन्न संघर्षहरू नै लुकेका हुन्छन् । भौतिक संसारको प्रत्येक क्षेत्रमा आ-आफ्नै किसिमको संघर्षको सामना व्यक्तिहरूले स्वाभाविकरूपमा गरेको हुन्छ । एउटा किसानले खेतमा गर्ने संघर्ष आफ्नै किसिमको हुने गर्दछ भने व्यापारीले व्यापारमा गर्ने संघर्ष, नेताहरूले राजनीतिमा गर्ने संघर्ष, वैज्ञानिकहरूले नयाँ-नयाँ अविष्कारको लागि गर्ने संघर्षदेखि लिएर समाजका विभिन्न क्षेत्रका व्यक्तिहरूले गर्ने संघर्ष पनि आ-आफ्नै प्रकारको हुने गर्दछ भने मन्त्र साधनामा अगाडि बढ्ने व्यक्तिले पनि आफ्नै प्रकारले यी संघर्षहरू पार गर्दै अगाडि बढ्नुपर्ने हुन्छ ।

साधनामा अगाडि बढ्ने साधक साधिकाले अरूले भन्दा बढी नै संघर्ष गर्नुपर्ने हुन्छ । जो साधक बन्न चाहन्छ, उसले संघर्षदेखि डराउनु हुँदैन, संघर्षलाई सधैँ साथी बनाउनुपर्दछ । साधकहरूलाई लाग्न सक्छ हामीले नै साधना गर्ने, हामीलाई नै झन् ठूलाठूला संघर्ष, हामीलाई नै ठूलाठूला अप्ठ्याराहरू, दुःखकष्टहरू ! हो, जो केही गर्छु भनेर महान् लक्ष्यमा अगाडि बढ्छ, उसले संघर्षहरूको परीक्षा दिनुपर्ने हुन्छ । प्रत्येक संघर्षले व्यक्तिलाई बलियो बनाउँछ, साहसी बनाउँछ, समाजलाई हेर्ने दृष्टिकोणलाई परिवर्तन गरिदिन्छ र समाजको यथार्थ धरातलको पनि परिचय दिन्छ । साधनाको बलले संघर्षलाई आफ्नो अनुकूल बनाउँदै अगाडिका संघर्षसँग जुध्नको लागि तम्तयार हुनुपर्दछ ।

मन्त्र साधनामा अगाडि बढ्दा व्यक्तिले बाहिरी संसारमा मात्रै नभई आफैभित्र पनि संघर्ष गर्नुपर्ने हुन्छ । बाहिरी संघर्ष आन्तरिक संघर्षको तुलनामा गौण हुन सक्छ । आफ्ना ज्ञानेन्द्रियहरूसँगको संघर्ष, इन्द्रियहरूसँगको संघर्ष, विचार-भावना, आसक्ति, काम, क्रोध, लोभ, मोहसँगको संघर्ष, आफ्नै मनसँगको संघर्ष, यस्ता संघर्षहरू गर्दै तिनलाई आफ्नो वशमा राख्दै हामी अगाडि बढ्नुपर्दछ, अनि मात्रै साधनामा सफलता हासिल गर्न सकिन्छ । त्यसैले मन्त्र साधनामा अगाडि बढ्नेहरू कहिल्यै भाग्नु हुँदैन । संघर्ष गर्न नसक्नेहरू त साधक हुनै सक्तैनन्, उनीहरूले प्राप्ति पनि गर्न सक्तैनन् । साधनामा सफलता भनेको धेरै ठूलो कुरा हो । स-साना कुरामा अल्झिने, स-साना कुरामा आत्तिनेहरूले साधनामा सफलता प्राप्त गर्न सक्दैनन् । त्यसैले आफूलाई संघर्षशील बनाउँदै धैर्यवान् भई अगाडि बढौँ, साधनामा सफलता प्राप्त गरौँ । जय गुरुदेव !

# तपाईं छुट्नुभएको त छैन ?

**तान्त्रिक ध्यानका प्रथम चरण, दोस्रो चरणका कक्षाहरू धमाधम सञ्चालन भइरहेका छन्। आजै नाम लेखाई आफ्नो स्थान सुरक्षित राख्नुहोला।**

**प्रथम चरण–** गोरक्ष निखिल वाणी पत्रिकाका सम्पूर्ण सदस्यहरुका लागि खुला ।

**दोस्रो चरण–** प्रथम चरणको ध्यान सम्पन्न गरिसक्ने साधक साधिकाहरुका लागि ।

बाँकी कुरा आश्रमको केन्द्रीय कार्यालय वा सम्पर्क कार्यालयहरूमा आएर बुझ्न सक्नुहुनेछ ।

**हाल ध्यान सञ्चालन भइरहेका र निकट भविष्यमा हुने स्थानहरू–**

केन्द्रीय कार्यालय बसुन्धरा, सम्पर्क कार्यालयहरु भक्तपुर (कटुञ्जे), ललितपुर (लगनखेल), काभ्रे (बनेपा), कास्की (पोखरा रामघाट, विन्ध्यवासिनी, लेखनाथ बडहरे), गोरखा (गोरखा बजार, लक्ष्मीबजार), सिन्धुपाल्चोक (बाह्रबिसे), तनहुँ ।

## आश्रममा उपलब्ध सेवाहरू

- योग, ध्यान, हिप्नोटिज्म, आदि बारे अध्ययन, अनुसन्धान एवं परामर्श सेवा ।
- मन्त्र शक्तिद्वारा हाम्रो दैनिक जीवनमा आइपर्ने विविध समस्याहरूको समाधान ।
- फोटो थेरापीको माध्यमबाट असाध्य रोगहरूको उपचार ।
- मन्त्र तन्त्रको माध्यमबाट साधनामा अघि बढ्न चाहने साधक साधिकाहरूलाई विशेष मार्गनिर्देशन ।
- पूर्ण प्रामाणिकरूपमा विशेष प्रक्रियाद्वारा प्राण-प्रतिष्ठित यन्त्र, माला, आसनलगायत साधनाका लागि आवश्यक सम्पूर्ण सामग्रीहरूको व्यवस्था ।
- परमपूज्य सद्गुरुदेव श्री श्री महायोगी गुरु गोरखनाथ एवं परमहंस स्वामी श्री निखिलेश्वरानन्द महाराजको बारेमा अध्ययन अनुसन्धान एवं जानकारी चाहनेहरूका लागि गोरक्ष निखिल पुस्तकालयको व्यवस्था ।
- विभिन्न किसिमका रोगहरूको उपचारका लागि विशेष तान्त्रिक हिलिङ्को व्यवस्था ।

# जाँदा जाँदै

'जसको शक्ति उसैको भक्ति' भन्ने उखान हाम्रो समाजमा अहिले पनि प्रचलित रहेको छ। भक्तिको कुरा गर्दा वास्तवमा जो शक्तिवान् छ, उसैको भक्ति गरिएको हामी पाउँछौँ। शक्तिहीनहरुको भक्ति कहीँ कसैले पनि गरेको पाइँदैन। देवता भन्नासाथ नै शक्तिको पुञ्ज, शक्तिको स्रोत भन्ने हामी बुझ्दछौँ। त्यसैले पनि आफ्ना इष्टदेवता, कुलदेवता, गुरुहरुको भक्ति गर्ने प्रचलन हाम्रो समाजमा परापूर्व कालदेखि नै विद्यमान रहँदै आएको पाउँछौँ। शास्त्रले भक्तिका प्रकारहरुको बारेमा विभिन्न रुपले व्याख्या गरेका छन्। भक्तिको बारेमा धेरै चर्चा परिचर्चाहरु भएका छन् तर शास्त्रले वर्णन गरेअनुसारकै भक्ति र भाव कसरी उत्पन्न गर्ने? के गऱ्यो भने मानिस सच्चा भक्त बन्न सक्छ? सच्चा भक्त बन्ने कडी के हो? त्यसको बारेमा भने त्यति उजागर गरेको पाइँदैन। जहाँ पनि भक्ति यस्तो प्रकारको हुनुपदर्छ, यी यी प्रकारका भक्तिबाट भगवान् खुशी हुनुहुन्छ भनेर उल्लेख चाहिँ गरिएको हुन्छ तर त्यो भक्ति गर्ने तरीका चाहिँ अथवा त्यसलाई प्रयोगात्मक रुपमा कसरी अवलम्बन गर्ने भन्ने विषयगत ज्ञान दिने गुरुहरु भने समाजमा धेरै कम पाइन्छ जसले गर्दा भक्ति गर्नुपर्छ, भक्ति यति प्रकारको हुन्छ, यस्तो हुन्छ, उस्तो हुन्छ भनेर सुगा रटाइ त सबैले रट्ने भए तर भक्ति नै गर्ने मानिस खोज्न चाहिँ समाजमा अहिले गाह्रो भइरहेको छ। जसले सच्चा भक्ति गर्छ, उसले यी कुराहरुमा कुनै मतलब राख्दैन। शास्त्रमा के लेखेको छ, कस्तो प्रकारको भक्ति गर्नुपर्दछ भनेर शास्त्रको बारेमा जानकारी नै नहुने एउटा अनपढ व्यक्तिको जति भक्ति हुन्छ, जुन प्रकारबाट उसले आत्मिक रुपमा भक्ति गरेको हुन्छ, त्यस्तो भक्ति पढेर वा ज्ञान सुनेर अथवा कथा पुराणहरुको अध्ययन गरेर जो विद्वान् बनेको हुन्छ, उसबाट त्यस्तो भक्तिको अपेक्षा गर्न सकिँदैन। भक्ति र विद्वता यी दुई चीज एकै ठाउँमा रहन सक्दैनन् किनकि विद्वान्ले तर्क खोज्छन्, बुद्धि लडाउँछन् र विज्ञानको कसीमा घोट्न खोज्छन्। तर भक्तिमा न त तर्कले काम गर्छ, न बुद्धिले, न यसलाई कसी नै लगाउन सकिन्छ। यो त आफैभित्र घटित हुने प्रक्रिया हो। कसैले पाठ पढेर म यस्तो भक्ति गर्छु भनेर भक्ति पलाउने होइन, न त व्याख्यान सुनेर नै भक्ति उजागर हुने हो। यो कसरी हुन्छ वास्तवमा भन्नै सकिन्न। प्रत्येक व्यक्तिमा भक्तिरस आ-आफ्नै प्रकारले जागृत भएको हुन्छ। एउटालाई भजन गाउँदा वा सुन्दा भक्तिरस जाग्यो भनेर अर्कोलाई त्यो नहुन सक्छ। उसलाई पूजा गर्दा भक्तिरस जाग्न सक्छ। तसर्थ सबैभन्दा ठूलो कुरा त निस्वार्थ सेवा हो जसले हामीमा भक्तिरस पैदा गर्न मद्दत पुऱ्याउँछ। हुन त शास्त्रमा भगवद्भक्तिका बारेमा धेरै चर्चा परिचर्चाहरु भएका छन्। त्यसको तुलनामा गुरुभक्तिको प्रसंग भने कमै उल्लेख गरिएको छ। अनेक फूलबुट्टा भरिएका कथाप्रसंगहरुमा अल्झिँदाअल्झिँदै जीवनमा गुरुभक्तिको रसास्वादन गर्ने नपाई कैयौँ व्यक्तिहरुको जीवन समाप्त भएको छ। तर हामी चाहन्छौँ तपाईँ फेरि त्यो इतिहासलाई नदोहोऱ्याउनुहोस्। गुरुः साक्षात् परब्रह्म भन्ने वाक्यको आशयलाई बुझेर गुरुभक्तिमा डुब्नुहोस् अनि हेर्नुहोस् तपाईँको जीवनमा कसरी परिवर्तन आउँछ, निरस जीवन कसरी उत्साहपूर्ण हुन्छ, जोश जाँगर र उमंगले भरिएर आउँछ। गुरुत्व सत्ता भनेको सम्पूर्ण सत्ता ऋषि सत्ता, दैवी सत्ता, मनुष्य सत्तालाई सञ्चालन गर्ने परम सत्ता हो। यस्ता परम सत्ताका परमाधिपति नै सद्गुरु हुनुहुन्छ। शास्त्रले उल्लेख गरेको परब्रह्म परमात्मा हुनुहुन्छ भने अन्यत्र किन अल्झने? सौभाग्य पाएका छौँ भने यसलाई उपयोग गर्न पनि जान्नुपर्छ अन्यथा समुद्रमा रहेर पनि सधैँ प्यासी रहिरहनेछौँ। सद्गुरुका अगाडि कोही साना ठूला हुँदैनन्। कसैप्रति भेदभाव उहाँहरुले गर्नुहुन्न र जुन भगवद्प्राप्तिका लागि अनेक क्रियाकर्म हामी जीवनभर गर्दछौँ, ती सबै कुरा त उहाँले क्षणभरमै प्रदान गर्न सक्नुहुन्छ किनकि दैवी सत्ता पनि उहाँकै इशारामा सञ्चालन हुने गर्दछ। यो रहस्यलाई आजै बुझौँ र भक्ति गर्नु छ भने परब्रह्म परमात्मास्वरुप सद्गुरुदेव श्री श्री महायोगी गुरु गोरखनाथ एवं परमहंस स्वामी श्री निखिलेश्वरानन्द महाराजकै गरौँ। अस्तु।